# गोरक्ष निखिल वाणी

आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक

माघ २०६७

## गुरुमाता विशेषाङ्क

**पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको**

**राष्ट्रिय अभिनन्दन तथा अन्तर्राष्ट्रिय साधना शिविर**

॥ ॐ नमो गुरु मछिन्द्र शब्द साँचा पिण्ड काचा मेरा भक्ति गुरुका शक्ति नवनाथै जगाऊँ चौरासीनाथै जगाऊँ फूरो मंत्र ईश्वरो गुरु गोरख वाचा ॥

१-१२: परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूको बारेमा डकुमेन्ट्री तथा पुस्तक प्रकाशनार्थ गुरुधाम जोधपुरलगायत भारतका विभिन्न स्थानको भ्रमण। १३-१५: तनहुँमा भएको तनहुँ महोत्सवमा आश्रमबाट सम्पन्न भजनकीर्तन कार्यक्रम।

● वर्ष १२ ● अङ्क ६ ● माघ २०६७ ● पूर्णाङ्क १३८


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन: २२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेंसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौं**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौं**, सिमलटार
- **काठमाडौं**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी

पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## गुरुमाता विशेषाङ्क


मूल्य रु. ५१/-, वार्षिक रु. ३५०/-


### नेपाली



### हिन्दी



### English

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ। परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो। आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ। यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ। यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन्। यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ। त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन्। त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो। प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ। विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ। यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ। साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ। साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ।

## आश्रमका नियमित कार्यक्रमहरू

प्रत्येक साँझ ५ बजे गुरु आरती। प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन। प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम। प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित वगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन। विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम। गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन। विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन। समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन। तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू। समय समयमा विशेष साधना कार्यक्रमहरू। प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण। समस्या समाधानका लागि परामर्श सेवा। असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग
ssk.org.np, info@ssk.org.np

**मुद्रण**
भेराइटी प्रिन्टर्स प्रा.लि.
कुलेश्वर, काठमाडौँ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौँ, नेपाल**
**फोन नं: ०१-४३८९१५४, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

परमपूज्य सद्‌गुरुदेवहरुको असीम कृपा एवं आशीर्वादस्वरुप सिद्धाश्रम शक्ति केन्द्रले एक ऐतिहासिक एवं अद्वितीय कार्यक्रम आयोजना गर्न गइरहेको छ। सधैं आफ्नै स्वाभिमान, आफ्नै पहिचान बनाउन सफल यस केन्द्रले पूजनीय गुरुमातालाई सर्वथा पहिलोपटक राष्ट्रिय अभिनन्दन गरी सम्पूर्ण शिष्यहरुको लागि गर्व गर्न लायक कार्य गर्न गइरहेको छ। आफ्ना परम वन्दनीय गुरुमातालाई आफ्नो माझमा राखेर राष्ट्रिय रुपमा नै अभिनन्दन गर्न पाउँदा सम्पूर्ण नेपाली तथा भारतबाट आएका शिष्यहरुको हर्षको सीमा रहने कुरै भएन। शिष्यको कर्तव्य पनि हो गुरुमातालाई सम्मान गर्नु, आदर गर्नु, उहाँको सेवामा जुट्नु, उहाँप्रति सधैं नतमस्तक हुनु। नेपालमा भएका केही सीमित अद्वितीय साधना शिविरहरुको इतिहासमा यसपालिको शिविरले आफ्नै गौरवमय इतिहास राख्नेछ। यसपालिको शिविर यस अर्थमा पनि अद्वितीय रहने निश्चित छ कि सर्वथा पहिलोपटक पूजनीय गुरुमाताको मुखारविन्दबाट गुरुमन्त्र प्राप्त गर्ने स्वर्णिम अवसर थुप्रै साधक साधिकाहरुले प्राप्त गर्दै हुनुहुन्छ। यस्तो दिव्य अवसर जुटाइदिन सफल भएकोले पनि आयोजकको रुपमा सिद्धाश्रम शक्ति केन्द्र हर्षित र गर्वित रहेको छ। परमपूज्य गुरुदेवहरुको दिव्य कृपा, आशीर्वाद एवं छत्रछायाँ यसरी नै रहँदै आओस् भन्ने प्रार्थनाका साथ उहाँहरुको चरणमा नतमस्तक छौं।

अद्वितीय साधना शिविर कार्यक्रमका साथमा पूजनीय गुरुमातालाई राष्ट्रिय रुपमा अभिनन्दन गर्ने भएकोले यसपालि पूजनीय गुरुमाता विशेषको रुपमा गोरक्ष निखिल वाणीलाई विशेषांकको रुपमा यहाँहरु समक्ष ल्याएका छौं। पूजनीय गुरुमाताको बारेमा केही अंश रुपमा भए पनि केही जानकारी दिने कोशिश गरेका छौं। शब्द चर्चाभन्दा धेरै पर, हाम्रो सोचाइ, कल्पनाभन्दा धेरै पर रहनुभएकी गुरुमाता आफैमा परब्रह्म स्वरुपमा हुनुहुन्छ। शक्तिस्वरुपमा माताको दिव्यता, उच्चता शिष्यहरुको वशको विषय होइन। परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमाली स्वरुपको अवतरणमा उहाँको अर्धाङ्गिनी बन्ने सौभाग्य प्राप्त गर्ने आत्मा आफैमा चानचुने आत्मा हुने कुरै भएन। रामको रुपमा आउँदा सीता, कृष्णको रुपमा राधा भने झैं सद्‌गुरु स्वरुपको अवतरणमा नारायणकी भगवती बन्न पाउनुमा नै दिव्यता, उच्चताको वर्णन आफै प्रष्टिन्छ। बाह्य अवस्थामा नै परिणय सूत्रमा बाँधिएर सांसारीक लीलामा सारालाई चलायमान बनाउँदै आफूहरु पनि त्यस्तै भूमिका निर्वाह गरी गृहस्थी रुपमा विश्व ब्रह्माण्डकै अद्वितीय भूमिका निर्वाह गर्ने नारायण र भगवतीको जोडीको कसले इर्ष्या गरेनन् होला ? देवताहरुले पनि पृथ्वीतटमा यस्तो लीला हेर्न पाउँदा गर्वित भए होलान्। पृथ्वीमाता पनि आफ्नो काखमा महायोगीको जोडीलाई पाउँदा कति खुशी र आनन्दित हुनु भयो होला, शब्द मात्रै नभई सबैलाई पूर्णतामा लैजान सक्ने नारायण र भगवतीको छत्रछाया पाउनु सम्पूर्ण शिष्यको लागि गर्वको विषय हो। हुन त अज्ञानताको भूमरीमा रुमलिएको यस समाजका व्यक्तिहरु आफ्नै बुद्धि लगाउँछन्, आफै नै जान्ने सुन्ने ठान्छन्। आफ्नै अगाडि समुद्रमा डुबुल्की लगाउन पाउँदा पनि तर्क गरेर नालीतिर दगुर्छन्। त्यसैले होला नेपाली उखान टुक्काले भनेको छ– 'बुझ्नेलाई श्रीखण्ड नबुझ्नेलई खुर्पाको बिंड।'

अन्तमा यस पत्रिकालाई विशेषांकको रुप दिने क्रममा विभिन्न कारणले हामीले सोचे जस्तै बनाउन सम्भव भएन, जस्तो रुपमा यहाँहरुको हातमा ल्याउन सफल भयौं त्यसलाई पनि ठूलो उपलब्धि ठानेका छौं। देश विदेशका सम्पूर्ण साधक साधिकाहरुलाई पढ्न, बुझ्न सजिलो होस् भनी यस अंकमा हामीले नेपाली भाषाका साथै हिन्दी, अंग्रेजीमा पनि केही लेख रचना प्रकाशित गरेका छौं। आशा छ, सम्पूर्ण स्तरका पाठकहरुले अवश्य लाभ उठाउनु हुनेछ। अन्तमा पूजनीय गुरुमाता एवं गुरुदेव अरविन्द श्रीमालीज्यूप्रति नतमस्तक हुँदै यस विशेषांक निकाल्ने क्रममा हामीबाट जान अन्जानमा भए गरेका सम्पूर्ण गल्ती, कमी कमजोरीको लागि परमपूज्य सद्‌गुरुदेवसँग र यहाँहरुसँग पनि क्षमा माग्दछौं। साथै आवश्यक सल्लाह सुझावको पनि अपेक्षा राख्दछौं। अस्तु।

परमपूज्य सदगुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सदगुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

**मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ । गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ । सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ । यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्‌गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ । गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–**

### परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्‌गुरुं निखिलेश्वरं ।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ । आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३५ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो । वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो । आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो । त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो । संन्यास जीवनपश्चात् पुनः गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो । यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो । यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्‌गुरु आदिको संज्ञाले विभूषित हुनुभयो । आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो । हाल सद्‌गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ ।

### श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम् ।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ । महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ । योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो । यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ । गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ । श्रीमद्‌भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ । विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौं हजारौं वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ । यसबारे विभिन्न विद्वान्‌हरूले थुप्रै अनुसन्धान गरेका छन् । आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ । उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ । नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ । नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो । नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन् । आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ ।

# जयतु जयतु जय महालक्ष्मी

लक्ष्मी साधना जीवनको महत्त्वपूर्ण पक्ष हो । तर लक्ष्मीको बीज तत्त्वलाई बुझेर कति मानिसले त्यसको साधना गर्छन्, तपस्या गर्छन् भन्ने कुरा झनै महत्त्वपूर्ण छ । यस विषयमा सद्गुरुदेवको यस प्रवचनको एक-एक शब्दले जीवनलाई परिवर्तित गर्न सक्छ–

**याश्री स्वयं सुकृतिनां भवनेष्पलक्ष्मी**
**पापात्मनां कृतधियां हृदयेषु बुद्धिः ।**
**श्रद्धा सतां कुलजन प्रभवेषु लज्जा**
**तां त्वां नतोऽस्मि परिपालय देवि विश्वम् ।**

भगवती महालक्ष्मी आराध्यदेव विष्णुका आधारभूता शक्ति दश महाविद्यामा कमलाको नामले महाविद्या र त्रिगुणात्मक स्वरूपमा भगवती महालक्ष्मीको स्वरूपमा सम्पूर्ण विश्वमा वन्दनीय छिन् किनकि उनी सम्पूर्ण विश्वका आधार भगवती लक्ष्मी हुन् । लक्ष्मी क्षीरसागरबाट उत्पन्न, समस्त संसारको पालनपोषण गर्ने, जीवनमा सुख, सौभाग्य र आनन्द, पूर्णता प्रदान गर्ने एउटी यस्ती महादेवी हुन् जसको आराधना संसारका प्रत्येक व्यक्ति गर्न उत्सुक हुन्छन् । यो महत्त्वपूर्ण तथ्य हो कि हरेक राष्ट्रमा भगवती लक्ष्मीको साधना, आराधना, उपासना हुन्छ चाहे त्यो बेग्लै नामबाट होस्, चाहे बेग्लै रूपमा, चाहे बेग्लै क्रिया पद्धतिबाट भएको नै किन नहोस् । तर लक्ष्मीको मान्यता त सम्पूर्ण विश्वमा छ किनकि लक्ष्मी त जीवनको आधार हुन् । लक्ष्मी बिना त जीवनको आधारभूत सत्य नै समाप्त हुन्छ ।

जीवनका दुई पक्ष छन्– आध्यात्मिक र भौतिक । आध्यात्मिक जीवनको आधार लक्ष्मी नै हुन् । यसको मूलमा त लक्ष्मी नै छिन् । ठीक यसरी नै भौतिक सम्पदाका अधिष्ठात्री देवी महादेवी नै हुन् ।

हामीहरुमध्ये अधिकांश व्यक्ति गरीब, निर्धन, असहाय र अशक्त छौँ जोसँग भन्ने हो भने पूर्ण रूपमा उपयोगमा आउने वस्तुहरुको अभाव छ । यो कुरा निर्विवाद रूपमा सत्य हो कि परिश्रमबाट मात्रै जीवनमा पूर्णता र सम्पूर्णता आउँदैन । कुनै श्रमिकले दिनभरि काम गर्छ र साँझ २/३ सय रूपैँया बोकेर घर फर्कन्छ । जीवनमा उसले उक्त

**यदि हाम्रो जीवनमा अन्नको नितान्त आवश्यकता छ, जलको जरुरत छ, प्राणवायु लिनु नितान्त अनिवार्य छ भने लक्ष्मीको साधना पनि अति नै आवश्यक छ । जसले यस सत्यलाई बुझ्न सक्दैन उसले जीवनमा केही पनि बुझ्न सक्दैन । जसले जति चाँडै यस तथ्यलाई बुझ्दछ कि जीवनमा पूर्णताका लागि लक्ष्मीको आराधना, लक्ष्मीको सहयोग आवश्यक छ, ऊ जीवनमा पूर्णतातिर वेगले अग्रसर हुन सक्छ ।**

रूपैँयाँबाट आफ्ना अभावहरु हटाउन सक्दैन । परिश्रम गर्नमा भने उसले केही कसर छोडेको हुँदैन । तर परिश्रम मात्रैले लक्ष्मीको प्राप्ति भने हुन सक्दैन । लक्ष्मीको प्राप्ति त दैवीकृपा वा भगवती लक्ष्मीको साधनाबाट मात्रै सम्भव हुन्छ । जो व्यक्ति अहंकारले ग्रसित छ, जो नास्तिक छ, जसले देवताहरु, साधनाहरु, आराधनाहरु, सिद्धिहरु, मन्त्रहरुलाई चिन्दैन वा तिनीहरुमाथि विश्वास गर्दैन, उसले जीवनमा धेरै ठूलो अभावलाई पालेर राखेको हुन्छ । उसको जीवनमा सबै कुरा भएर पनि केही पनि हुँदैन । निर्धनता उसको चारैतिर घेरिएर बसेको हुन्छ । जीवनका समस्याहरु उसको नजिक मुख बाएर बसेका हुन्छन् । आफूलाई चाहे जतिसुकै साहसी सिद्ध गरे पनि यो कुटुसत्य हो कि उसले जीवनमा त्यो आनन्द, त्यो मधुरता, त्यो वैभवलाई प्राप्त गर्न सक्दैन जुन दैवीकृपा वा भगवती लक्ष्मीको कृपाले प्राप्त हुन्छ । प्रत्येक व्यक्ति चाहे त्यो गृहस्थ जीवनमा होस्, भौतिक जीवनमा होस् वा संन्यासी जीवनमा, हिमालयमा विचरण गर्ने होस् लक्ष्मीको अवलम्बन त लिनै पर्दछ । जसले यस कटुसत्यलाई बुझ्दछ, जसले यस कुरालाई बुझ्दछ कि जीवनको आधारभूत सत्य भौतिक सम्पदा हो र भौतिक सम्पदाको माध्यमबाट नै जीवनमा पूर्णता र निश्चिन्तता आउन सक्छ, ऊ लक्ष्मीको आराधना, लक्ष्मीको अर्चना र लक्ष्मीको कृपाको अभिलाषी अवश्यै हुन्छ । म यो भन्दिन कि कुंकुम, अक्षताबाट नै पूजा गरियोस् । म यो पनि भन्दिन कि केवल आरती उतारियोस् । यी त पूजाका विधि हुन् । साधना त यसभन्दा माथि छ जहाँ मन्त्रजपको माध्यमबाट हामी देवताहरुलाई यस कुराका लागि विवश गरिदिन्छौँ कि उनीहरु आफ्नो सम्पूर्णताका साथ हाम्रो साथ होऊन्, हामीलाई सहायता गरुन्, हाम्रो जीवनमा जे अभाव छ, जे चिन्ता छ, जे जति बाधाहरु छन्, त्यसलाई निदान गरुन् र हाम्रो जीवनलाई अझै सुखमय, अझै मधुर, अझै आनन्ददायक बनाऊन् ।

यसमा दुईमत छैन कि जीवनमा महाकाली र महासरस्वतीको साधना पनि आवश्यक छ । भगवती कालीको साधनाबाट जहाँ जीवन निष्कंटक र शत्रुरहित बन्छ, व्यक्ति निश्चिन्त भएर आफ्नो यात्रामा बडो वेगका साथ अगाडि बढ्छ । महासरस्वती साधनाको माध्यमबाट हामीलाई बोल्ने शक्ति प्राप्त हुन्छ, हाम्रो व्यक्तित्व निखिन्छ, हामी समाजमा सम्माननीय र पूजनीय हुन्छौँ । तर यो सबै तब हुन सक्छ जब लक्ष्मीको आधार हुन्छ ।

**यस्यास्ति वित्तं स नरः कुलीनः**
**स पण्डितः स श्रुतवान् गुणज्ञः**
**स एव वक्ता स च दर्शनीयः**
**सर्वे गुणाः काञ्चनम आश्रयन्ति ॥**

जसलाई लक्ष्मीको कृपा छ, समाजले उसलाई समझदार ठान्छ, प्रतिष्ठित ठान्छ, उच्च खानदानको ठान्छ । सपंडित छ भने उसलाई पंडित भन्छ, विद्वान् भन्छ, सगुणज्ञहरुले

ऊसित सल्लाह लिन्छ, उसको नजिक झुम्मिन्छ, ऊसँग मित्रता राख्ने प्रयास गर्दछ। जोसँग लक्ष्मीको कृपा हुन्छ, ऊ आफैमा राम्रो वक्ता बन्छ। '**स्वय वक्ता। सः सुदर्शनीयम**' मानिसहरु उसको सम्मान गर्दछन्, समाजमा पूजा गर्छन्, उसको नजिक बस्ने र ऊसित मित्रता गाँस्न प्रयत्नशील हुन्छन् । कविले भनेका छन् कि '**सर्वगुणा काञ्चन मासियन्ते ।**' यो त भगवती लक्ष्मीको कृपा हो जुन त्यस व्यक्तिलाई प्राप्त छ ।

प्रश्न उठ्छ कि के प्रत्येक मानिसका लागि लक्ष्मीको साधना आवश्यक हुन्छ ? यदि हाम्रो जीवनमा अन्नको नितान्त आवश्यकता छ, जलको जरुरत छ, प्राणवायु लिनु नितान्त अनिवार्य छ भने लक्ष्मीको साधना पनि अति नै आवश्यक छ। जसले यस सत्यलाई बुझ्न सक्दैन उसले जीवनमा केही पनि बुझ्न सक्दैन । जसले जति चाँडै यस तथ्यलाई बुझ्दछ कि जीवनमा पूर्णताका लागि लक्ष्मीको आराधना, लक्ष्मीको सहयोग आवश्यक छ, ऊ जीवनमा पूर्णतातिर वेगले अग्रसर हुन सक्छ । यो आवश्यक छैन कि कुनै योगी, संन्यासी, साधु वा साधकले नै लक्ष्मीको साधना गरोस् । चाहे पुरुष होस्, चाहे स्त्री होस्, चाहे बालक होस्, चाहे वृद्ध होस्, चाहे धनी होस्, चाहे गरीब होस्, लक्ष्मीको साधनाबाट नै जीवनमा पूर्णता र अनुकूलता आउन सक्छ, जीवन सुखमय बन्न सक्छ, जीवनमा श्रेष्ठता, जीवनमा पूर्णता, जीवनमा सौभाग्य, जीवनमा सुख र सम्पन्नता आउन सक्छ। कुनै पनि देवताको साधनाबाट यो सम्भव छैन । चाहे हामीले रुद्रको साधना गरौँ, चाहे ब्रह्माको साधना गरौँ, चाहे कुबेरको साधना गरौँ, चाहे इन्द्रको साधना गरौँ, यी सबै गौण छन् । वैभव र लक्ष्मीकी अधिष्ठात्री देवी त भगवती लक्ष्मी नै हुन् र केवल लक्ष्मीको साधनाको माध्यमबाट मात्रै व्यक्तिले आफ्ना अभावहरुलाई भगाउन सक्छ, पूर्वजहरुको गरीबी र निर्धनतालाई हजारौँ मील टाढा धकेल्न सक्छ, सम्पन्नता र वैभवको प्रदर्शन गर्न सक्छ । लक्ष्मीको कृपा भएमा मन्दिर बनाउन सक्छ, धर्मशाला बनाउन सक्छ, तलाउको निर्माण गराउन सक्छ र समाजसेवाको माध्यमबाट हजारौँ, लाखौँ मानिसहरुको कल्याण गर्न सक्छ। यस दृष्टिबाट भगवती लक्ष्मीको साधनाबाट व्यक्तिले आफ्नो जीवनलाई श्रेष्ठ बनाउन सक्छ, पूर्णता प्रदान गर्न सक्छ भने उहीँ समाजका ठूला वर्गलाई पनि सुख र सौभाग्य, आनन्द र मधुरता प्रदान गर्न सक्छ । एक भगवती महालक्ष्मीको साधना मात्रै अत्यन्तै सरल छ जसमा मन्त्रको आडम्बर छैन, जसमा धेरै कर्मकाण्ड छैन, क्रियाकलाप छैन, जसमा धेरै उपकरणहरुको आवश्यकता छैन । अति नै सरल र सहज साधना छ लक्ष्मी साधना । कतै पनि बसेर यस प्रकारको साधना सम्पन्न गर्न सकिन्छ। केवल आवश्यकता छ दृढ निश्चयको, आवश्यकता छ यस सत्यलाई बुझ्ने, आवश्यकता छ यस साधनामा प्रवृत्त हुने र आवश्यकता छ दृढताका साथ यस साधनालाई पूर्णता प्रदान गर्ने। यस कार्यलाई गुरुले मात्रै गर्न सक्नुहुन्छ किनकि लक्ष्मीका त हजारौँ रूप छन्, हजारौँ प्रकारका लक्ष्मीका साधना छन्। वैष्णव मतका बेग्लै साधना छन्, रुद्र मतका बेग्लै विधि छन्, दामनी पद्धतिबाट लक्ष्मीको साधना बेग्लै ढङ्गले गरिन्छ, वेदोक्त लक्ष्मी पूजन र साधना फरक ढङ्गले सम्पन्न गरिन्छ, शाक्त सम्प्रदायले लक्ष्मी साधनाको बेग्लै रूप स्पष्ट गरेको छ, औघड सम्प्रदाय, नाथ सम्प्रदाय, श्मशान सम्प्रदाय प्रत्येक पन्थ र सम्प्रदायले लक्ष्मीका कैयौँ विधि, कैयौँ स्वरूप र लक्ष्मीसित सम्बन्धित कैयौँ साधनाहरु स्पष्ट गरेका छन् । यसैले यो कुरा बुझ्नै नसकिने छ कि कुन प्रकारले साधना गर्ने ? कुन साधना गर्ने ? यी सबै साधनाहरु लक्ष्मी प्रदान

गर्ने साधनाहरु हुन् । यी सबै साधनाहरुबाट लक्ष्मीको वरदहस्त वरदान प्राप्त हुन्छ र प्रत्येक व्यक्तिका लागि बेग्लै प्रकारको साधना नै मान्य छन्, किनकि प्रत्येक व्यक्ति अन्यभन्दा भिन्न हुन्छन्, उसको प्रकृति, उसको आकार, उसको चिन्तन, उसको विचार-पद्धति, उसको जीवन निर्माणका तन्तु सबै बेग्लाबेग्लै छन् । बेग्लाबेग्लै छन् भने फेरि लक्ष्मीको स्वरूप पनि बेग्लाबेग्लै हुन्छन् । अमुक व्यक्तिका लागि कुन प्रकारको साधना उपयुक्त छ, कुन साधना उपयुक्त हुन्छ, कुन प्रकारले लक्ष्मीको साधना सम्पन्न गर्ने भन्ने सबै विचारणीय छन् र यसको ज्ञान केवल गुरुले मात्रै दिन सक्नुहुन्छ । जो यसका पथप्रदर्शक हुनुहुन्छ, जो उसलाई बाटो देखाउने हुनुहुन्छ, जो उसको जीवनको निर्माण गर्ने हुनुहुन्छ, जो उसका बाधा र चिन्ताहरुबीच स्तम्भजस्तै उभिनुभएको छ किनकि गुरुलाई यी सारा पद्धतिहरुको ज्ञान हुन्छ, यदि कोही सही अर्थमा गुरु हुनुहुन्छ भने । यदि पाखण्डी हो, ढोंगी हो भने उसले शिष्यलाई कुनै ज्ञान दिन सक्दैन किनकि जब स्वयंलाई ज्ञान छैन भने उसले शिष्यलाई के ज्ञान दिन्छ ? जो स्वयं निर्धन छ, उसले शिष्यलाई के सम्पन्न गर्न सक्छ, जो स्वयं अज्ञानी छ उसले शिष्यलाई के ज्ञान कसरी दिन सक्ला ? जसले वैभव, सम्पदाको आस्वादन गरेको छैन, उसले शिष्यलाई यस बाटोमा कसरी गतिशील गर्न सक्ला ?

यसका लागि आवश्यकता छ जीवित, जाग्रत, चैतन्य गुरुको । जीवित, जाग्रत गुरु यसकारण कि यी सबै तथ्यको ज्ञान, यी सबै पद्धतिहरुको ज्ञान उहाँलाई हुन्छ, उहाँलाई यो ज्ञान हुन्छ कि कुन साधना गर्ने, कुन प्रकारको साधना शिष्यलाई दिँदा हुन्छ । साधना मात्रै दिने होइन, ऊ सित बस्नुहुन्छ, उसलाई सम्झाउनुहुन्छ । उसको कार्य पद्धति, मन्त्रजपको प्रकार, उसको उपकरण, त्यो सित सम्बन्धित यन्त्र र अन्य जे पनि आवश्यक उपकरण एवं सामग्री हुन्छन्, उसको चिन्तन, मार्गदर्शन गुरुले प्रदान गर्नुहुन्छ र त्यस बाटोमा हिँडेर व्यक्तिले भगवती महालक्ष्मीको कृपा प्राप्त गर्दछ, जीवनमा सबै दृष्टिले पूर्णता प्राप्त गर्दछ, जीवनका अभावलाई दूर गर्दछ, जीवनमा सबै दृष्टिले पूर्णता प्राप्त गर्दछ र ती सबै प्राप्त गर्दछ जुन जीवनमा आवश्यक छ, अनिवार्य छ, आनन्ददायक छ, मधुर छ, पूर्णदायक छ ।

यसैले व्यक्तिलाई लक्ष्मीसँग सम्बन्धित साधनाहरु खोज्नुभन्दा पहिले, लक्ष्मीको कृपा प्राप्त गर्नुभन्दा पहिले गुरुलाई खोज्नु आवश्यक छ । यस्तो गुरु जो स्वयं समर्थ हुनुहुन्छ, यस्तो गुरु जो स्वयं योग्य हुनुहुन्छ, जसमा ज्ञान होस् जसमा चेतना होस्, जो शिष्यको कल्याण गर्न समर्थ होऊन्, जसले शिष्यलाई मार्गदर्शन गराउन सकुन्, जसले शिष्यलाई बाटो देखाउन सकुन्, जसले उसको औँला समातेर साधनाको आनन्द र साधनाको स्वाद प्रदान गर्न सकुन् । फेरि समय मिलेमा भगवती लक्ष्मीसित सम्बन्धित कुन चाहीँ साधना प्राप्त गर्ने, सम्पन्न गर्ने भनेर गुरुसित प्रश्न गर्नुपर्दछ जसबाट जीवनको गरीबी, जीवनको अभाव, जीवनको निर्धनता दूर होस्, ऐश्वर्य आउन सकोस्, श्री र सौभाग्य आउन सकोस् । गुरुले त्यस साधना पद्धतिलाई प्रदान गर्नुहुन्छ जुन उसको जीवनको लागि आवश्यक हुन्छ । यस प्रकारको साधना योगी, गुरु, मार्गदर्शक, विद्वान्, शास्त्र कसैले पनि प्रदान गर्न सक्छ । तर यस कुराको ध्यान रहोस् कि मनमा तीव्र इच्छा होस्, एउटा चेतना

**धेरै जन्म आलस्य गरिसक्यौं, धेरै जन्म निद्रामा मस्त भयौं, धेरै जन्म पशुले जस्तै जीवन जिइसक्यौं । धेरै जन्मदेखि लक्ष्मीको याचक बनेर, हात जोडेर र फैलाएर भिखारीजस्तै प्रस्तुत भयौं । अब यो चल्न सक्दैन ।**

---

होस्, एउटा विचार होस् कि यस साधनालाई सम्पन्न गर्नु नै छ । जबसम्म साधकमा जोश, चेतना, आत्मविश्वास हुँदैन तबसम्म साधना प्रारम्भ पनि हुन सक्दैन । मन्त्र, गुरु र साधनामाथि विश्वास हुनु पर्दछ ।

**मंत्रे तीर्थे द्विजे दैवे दैवज्ञे भेषजे तथा ।**
**यादृशी भावना यस्य सिद्धिर्भवति तादृशी ॥**

जस्तो भावना हुन्छ, जसको जस्तो श्रद्धा हुन्छ, उसलाई उत्तिनै फल मिल्छ । भगवती महालक्ष्मीको साधना प्रारम्भ हुन्छ भने त्यसको आधार नै श्रद्धा हुन्छ । श्रद्धाहीन मन्त्रजप व्यर्थ हुन्छ । हजारौं घिउको दीयो बालेर पनि हामीले भगवती महालक्ष्मीलाई प्रसन्न गर्न सक्दैनौं । उनको सामु भोग लगाएर, घण्टी बजाएर देवीको अनुकूलता प्राप्त गर्न सक्दैनौं । यस्तो कैयौं वर्षदेखि गर्दै आइरहेका छौं । भगवती महालक्ष्मीको चित्र घरमा स्थापित गरेर उनको सामु धूप, दीप बाल्दै आइरहेका छौं, भोग लगाउँदै आइरहेका छौं । तर हामी जहाँको त्यहीं छौं । के कारण होला ? यी सब गरेर पनि हामीलाई फल किन प्राप्त भइरहेको छैन ? यसको मूलमा अश्रद्धा हो, औपचारिकता हो, एउटा निर्वाह हो । यसैले भगवती महालक्ष्मीको साधना सम्पन्न गर्न, उनको प्रसन्नता प्राप्त गर्न, उनीबाट वरदान प्राप्त गर्नका लागि यो नितान्त आवश्यक छ कि हाम्रो मनमा श्रद्धा होस्, संकल्पशक्ति होस्, ज्ञान दिन सक्ने, चेतना दिन सक्ने गुरु होऊन्, जोसित व्यक्तिगत रूपमा भेटेर ती मन्त्रलाई प्राप्त गर्नुपर्छ जुन आफैमा चैतन्य हुन्छ र आधुनिक जीवनमा पूर्णता प्रदान गर्ने हुन्छ । अनि गुरु सामु पुगेर लक्ष्मी दीक्षा प्राप्त गरियोस् । यो दीक्षा त अनिवार्य नै छ किनकि गुरुले यस दीक्षाबाट शिष्यको सम्पूर्ण शरीरमा लक्ष्मी स्थापित गर्नुहुन्छ, १०८ लक्ष्मीको आवाहन गर्नुहुन्छ । धनलक्ष्मी, धान्यलक्ष्मी, धरालक्ष्मी, कीर्तिलक्ष्मी, आयुलक्ष्मी, वैभवलक्ष्मी, पुत्र-पौत्रलक्ष्मी, महालक्ष्मी, सम्पूर्णतालक्ष्मी... सैयौं लक्ष्मीका स्वरूप छन् । यी सबै स्वरूपलाई व्यक्तिको शरीरमा स्थापित गरेपछि दीक्षाको क्रम पूरा हुन्छ । तब साधकले लक्ष्मीको साधना गरेर निश्चित रूपमा पूर्णता र निश्चिन्तता प्राप्त गर्दछ, यो सत्य हो ।

यस प्रकार लक्ष्मी साधनाका विभिन्न प्रकारका स्वरूप छन् । वेदोक्त कालदेखि आजसम्म लक्ष्मी साधनाको सम्बन्धमा निरन्तर अनुसन्धान भइरहेको छ । कुन मन्त्रको कति उपयोगिता छ ? कुन मन्त्र कति समयसम्म प्रभावशाली रहन्छ ? लक्ष्मी साधनाका सात्त्विक र तामसिक मन्त्र कुन हो ? के कमला रूपमा साधना गरियोस् ? के श्री सुन्दरी रूपमा साधना गरियोस् ? के त्रिपुर सुन्दरी रूपमा साधना गरियोस् ? के कुबेर रूपमा साधना गरियोस् ? के विश्वामित्रप्रणीत तन्त्र रूपमा साधना गरियोस् ? अथवा ऋषि वशिष्ठप्रणीत साधना गरियोस् वा ऋषि पुलत्स्यप्रणीत साधना गरियोस् वा योगी विवेकानन्दप्रणीत साधना गरियोस् वा स्वामी सच्चिदानन्दजीद्वारा प्रणीत साधना गरियोस्, तान्त्रिक पगला बाबाप्रणीत साधना गरियोस् वा साबर तन्त्रका मसीहा गुरु गोरखनाथद्वारा प्रणीत साधना गरियोस् वा साबर तन्त्र गुरु मत्स्येन्द्रनाथप्रणीत साधना गरियोस् वा क्रियायोगका महान् योगी योगीराज त्रिजटा अगोरीप्रणीत साधना गरियोस् वा स्वामी भैरवानन्दद्वारा प्रणीत साधना गरियोस् वा अवधुत कीर्तियानन्दद्वारा प्रणीत साधना गरियोस् वा तान्त्रिक हलाहलनन्दद्वारा प्रणीत साधना गरियोस् वा फेरि स्वामी केवल्यानन्दद्वारा प्रणीत साधना गरियोस् अथवा रावणकृत उड्डीशतन्त्रबाट लक्ष्मी साधना गरियोस् वा माहेश्वरीतन्त्रद्वारा लक्ष्मी साधना गरियोस् । यी सबै साधनाहरु अति उत्तम छन् र मैले यी सबै साधनाहरुको नाम आजको प्रवचनमा यसैले लिइरहेको छु कि मैले जुन ज्ञान पाएको छु, त्यसलाई कतै लुकाएको छैन । पत्रिकाको माध्यमबाट सबै शिष्यहरुलाई यी साधनाहरु प्रदान गरेको छु । जसलाई जुन साधना आफ्नो रुचिअनुसार, प्रकृति अनुकूल लाग्छ, उसले लक्ष्मी साधना अवश्य नै गरोस् ।

शायद तपाईंले पत्रिकाको मुखपृष्ठ मात्र हेरेर पत्रिकालाई घरको कुनामा थन्क्याउने गर्नुहुन्छ होला । नत्र त यति दयनीय हालतमा हात फैलाएर मेरो सामु उभिनु हुन्थेन होला । यसको अर्थ यो हो कि मैले जुन ज्ञान दिएको छु, त्यस ज्ञानलाई तपाईंले प्राक्टिकल उपयोग गर्नुभएकै छैन । तपाईंले सोच्नुभयो कि गुरु कहाँ जान्छु र उहाँले

मन्त्र बताइदिनु हुन्छ । साधना सिद्ध हुनेछ, लक्ष्मी प्राप्ति हुनेछ भन्ने हाम्रो सोचाइ व्यर्थ गइरहेको छ । जबसम्म तपाईं कुनै साधना, देवता अथवा गुरुका साथ आत्मसात् हुनुहुन्न, जबसम्म त्यो साधना तत्त्व, त्यो गुरु तत्त्व तपाईंको रक्त-रक्त, कण-कणमा फैलिन सक्दैन तबसम्म साधनामा सिद्धि प्राप्त हुँदैन । म साधनाको माध्यमबाट तपाईंलाई कुनै चक्की अथवा पिउने औषधि दिँदै छैन जसको असर केही दिनपछि नै देखियोस् । औषधि लिइयो तर खानपानको ध्यान राखिन्न, मन्त्रजप बराबर गरिन्न, साधनामा एकाग्रता राखिन्न त लक्ष्मी साधनामा सफलता कसरी मिल्न सक्छ ? त्यसैले अब म इन्जेक्शनमा विश्वास गर्छु । सिधै नाडीमा इन्जेक्शन दिन्छु जसबाट रक्त सँगसँगै त्यो साधना सम्पूर्ण शरीरमा, रोम-रोममा व्याप्त हुन जाओस् ।

केही कालको दीक्षामा पनि मैले यसकारण जोड दिन्छु किनभने म आफ्ना शिष्यलाई, तपाईंलाई राम्रोसँग जान्दछु । यदि कुनै आलस्य सम्राटको पदवी हुँदो हो त तपाईंहरुमध्ये आठ-दश जना त अवश्यै आलस्य सम्राट बनिसक्नु हुन्थ्यो । तर अब यसरी चल्दैन । धेरै जन्म आलस्य गरिसक्यौं, धेरै जन्म निद्रामा मस्त भयौं, धेरै जन्म पशुले जस्तै जीवन जिइसक्यौं । धेरै जन्मदेखि लक्ष्मीको याचक बनेर, हात जोडेर र फैलाएर भिखारीजस्तै प्रस्तुत भयौं । अब यो चल्न सक्दैन । यदि भिखारी नै बन्ने हो भने कतै अन्त जानुहोस् । आज म यस मञ्चबाट कराइरहेको छु कि नारायणदत्त श्रीमालीका कुनै शिष्य भिखारी अथवा याचक हुन सक्दैन । यदि मैले एकपटक मात्रै भए पनि दीक्षा दिएको रहेछु, एकपटक मात्रै भए पनि मन्त्र दिएको रहेछु भने पनि त्यसको फिलुङ्गो तपाईंभित्र जलिरहेको छ । त्यो फिलुङ्गो ज्वाला बन्नका लागि तड्पिरहेको छ । तिमीले त्यसमा आफ्नो आलस्यको खरानी खन्याइदिएका छौ । म आज त्यस फिलुङ्गोलाई प्रचण्ड अग्निमा प्रज्ज्वलित गरिरहेको छु । त्यसमा लागि आठ, दस साधनाहरु गराउनु परे पनि गराउँछु । तर यहाँहरुमध्ये कतिपयले यो साधना सम्पन्न गरिरहनु भएको छैन । अहिलेसम्म मैले तपाईंहरुको सुन्दै आइरहें । अब भने तपाईंहरुले मेरो मन्त्रलाई चैतन्य भएर सुन्नु पर्नेछ, त्यसलाई आत्मसात् गर्नु पर्नेछ ।

मैले बताइरहेको थिएँ कि भगवती महालक्ष्मीको साधना पूर्व यदि व्यक्तिले आफ्ना गुरुबाट वा विद्वान्बाट भगवती महालक्ष्मीको दीक्षा प्राप्त गर्छन् भने निश्चय नै उसको जीवनमा साधनाको सम्पूर्णता प्राप्त हुन्छ । यो दीक्षा आफैमा अद्वितीय र श्रेष्ठ छ र धेरै कम गुरु र जानकारहरुलाई मात्र यस दीक्षाको बारेमा थाहा हुन्छ जसले १०८ प्रकारका लक्ष्मीलाई शरीरमा स्थापित गरुन् । कुन कुन अंगमा कुन कुन लक्ष्मी स्थापित हुन्छन्, कुन मन्त्रबाट स्थापित हुन्छन्, कुन प्रकारले स्थायित्व प्रदान गर्दछिन् ? यो एक जटील कार्य हो । यसलाई गुरुले राम्रोसँग निभाउन सक्नुहुन्छ । दीक्षा प्राप्तिपछि साधकले समय समयमा लक्ष्मीसँग सम्बन्धित साधनाहरु सम्पन्न गरोस् जसबाट उसको जीवनमा जुन अभाव छ, जुन निर्धनता छ, जुन कमी छ त्यो दूर हुन सकोस् ।

लक्ष्मीसित सम्बन्धित केही तथ्य जान्नु आवश्यक छ । महालक्ष्मीको साधना वा मन्त्रजप वा अनुष्ठान कुनै पनि महिनाको शुक्ल पक्षदेखि प्रारम्भ गर्न सकिन्छ । पञ्चमी, दशमी, पूर्णिमा वा कुनै पनि शुक्रबारदेखि यो साधना सम्पन्न गरियोस्, शुरु गरियोस् त अति उचित हुन्छ । साधना प्रारम्भ गर्नुभन्दा पहिले यदि शत्अष्टोत्तर लक्ष्मी दीक्षा प्राप्त हुन्छ भने त सफलता निश्चित हुन्छ । कुनै पनि प्रकारको भगवती महालक्ष्मीसँग सम्बन्धित साधना सम्पन्न गर्नका लागि सहस्र रूपेण महालक्ष्मी यन्त्रलाई स्थापित गरियोस् र त्यसको सामु साधना वा उपासना अथवा अनुष्ठान प्रारम्भ गर्दा निश्चय पनि सफलता प्राप्त हुनेछ किनकि यो यन्त्र आफैमा अति नै महत्त्वपूर्ण छ, यसमा हजार लक्ष्मीको स्थापना र त्यसको कीलन हुन्छ । जसबाट साधकको घरमा स्थायित्व प्रदान गर्दै रहेकी लक्ष्मी स्थापित होऊन् । पूजाको समयमा कमलको फूल, गुलाबको फूलको प्रयोग गरियोस् र कमलगट्टाको माला वा स्फटिक मालाबाट मन्त्रजप भएमा धेरै उचित मानिन्छ । यसप्रकारको साधना व्यक्तिले आफ्नो घरमा एक्लै वा पत्नीका साथ सम्पन्न गर्न सक्छन् ।

भगवती महालक्ष्मी साधनालाई जीवनको सर्वश्रेष्ठ मानिएको छ । भगवती महालक्ष्मी सम्पूर्णताका साथ तपाईंहरु सबैलाई, साधकहरुलाई, श्रोताहरुलाई प्राप्त होस्, यस्तै आशीर्वाद दिन्छु ।

**–परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्दजी**

# माताजी

माताजीले यस जीवनमा धेरै नै सहनुभएको छ । यही सहनशीलताले उहाँलाई असाधारण नारी बनाएको छ । गरिवी, अभाव र संकटलाई माताजीले धेरै नजिकबाट देख्नुभएको छ । त्यति मात्र नभएर जेठा छोरा पन्नालालको देहान्तले दिएको पुत्रशोक उहाँले झेल्नुभएको छ भने दुई वर्ष अघि जेठी छोरी सरोजको देहान्तको पीडा पनि उहाँले झेल्नुभएको छ । उहाँले भन्नुभयो, 'दुई वर्ष अगाडि ठूली छोरीको देहान्त भयो', त्यो भनेपछि उहाँले आफ्नो आँखामा आएको आँशु पुछ्नुभयो ।

माताजीलाई सबैभन्दा ठूलो आघात गुरुदेवको महाप्रयाणले पार्‍यो । त्यस घटनाले उहाँलाई छतविक्षत बनायो । यस सन्दर्भमा उहाँकी नन्द सावित्री श्रीमाली भन्नुहुन्छ, 'दाइको देह त्यागले भाउजु विक्षिप्त हुनुभयो । उहाँले दाइ जस्तो पतिलाई र आफ्नो ५१ वर्षको सहयात्रीलाई गुमाउनु भएको थियो, दुःखी हुनु स्वभाविक नै थियो । त्यस घटनाबाट साधारण अवस्थामा आउन उहाँलाई धेरै समय लाग्यो । अहिले पनि त्यो घटनाको चर्चा गर्दा उहाँ दुःखी हुनुहुन्छ ।'

गुरुदेवको महाप्रयाणपछि माताजी बाँच्न चाहनुभएको थिएन । त्यस समयमा गुरुदेवले सूक्ष्म रूपमा र स्थूल रूपमा समेत प्रत्यक्ष प्रकट भएर मातालाई सम्झाउनु भयो । त्यही कारणले नै माता जीवित रहन बाध्य हुनुभयो र यही कारणले नै हालसम्म सम्पूर्ण शिष्य समुदायलाई माताको भौतिक उपस्थिति र स्थूल ममता प्राप्त भइरहेको छ ।

अहिले माताजी एक्लै बस्नुहुन्छ त्यस घरमा जुन घरमा गुरुदेव बस्नुहुन्थ्यो । हुन त अहिले छोराहरुका ठूला ठूला घरहरु बनेका छन् तर माताजीलाई त त्यही घर प्रिय छ जुन घरमा गुरुदेवको धेरै वर्ष बितेको छ । त्यो सानो घरले गुरुदेवका धेरै स्मृतिहरु बोकेको छ । त्यसैले त्यो घर माताजीलाई जस्तै शिष्यहरुलाई पनि प्रिय छ ।

युगपुरुषको कार्यमा त्यति धेरै त्याग र सहयोग गरेकी व्यक्तित्व, गुरुदेव स्वयंले सधैं सम्मान गरेकी व्यक्तित्वलाई अहिले नै बिधवाको रूपमा देख्दा, एक्लै देख्दा शिष्यहरुको हृदय दुख्नु स्वभाविक नै हो ।

गुरुदेवको नेपाल प्रेमसँग सबै परिचित छन् । गुरुदेवले नेपाल भूमि र यसको दिव्यताको सधैं प्रशंसा गर्नुहुन्थ्यो भने नेपाल र नेपालीको धेरै माया गर्नुहुन्थ्यो । यो गुण माताजीमा पनि रहेछ । उहाँ पनि नेपालीहरुको धेरै माया गर्नु हुँदोरहेछ । माताजीको गुरुसेवामा रहेका साधक तोरण साहु भन्नुहुन्छ , 'माताजीलाई भेट्न धेरै मनिसहरु आउँछन्, टाढा-टाढाबाट आउछन् तर माताजी हतपत मानिसहरुलाई भेट्नुहुन्न, यसको लागि उहाँको स्वास्थ्यले पनि साथ दिँदैन । तर नेपालीहरु आउँदा उहाँले प्रायः भेट्नुहुन्छ ।'

माताजीलाई नजिकबाट कस्तो पाउनुभयो भनेर सोद्धा तोरण भन्नुहुन्छ, 'माताजी टाढाबाट हेर्दा भन्दा नजिकबाट

धेरै ममतामयी हुनुहुन्छ । उहाँ सबै शिष्यहरुलाई धेरै माया गर्नुहुन्छ । उहाँले मलाई धेरै माया दिनुभएको छ, मलाई जन्म दिने आमाले भन्दा पनि बढी ।'

उहाँ भन्नुहुन्छ, 'माताजी शिष्यहरुलाई मात्र होइन सबैलाई माया गर्नुहुन्छ । उहाँ धेरै दान गर्नुहुन्छ । अनाथाश्रम, वृद्धाश्रम र गरिब, दु:खीहरुलाई उहाँ दान गरिरहनु हुन्छ । आफ्ना नातेदार र वरिपरिका मानिसहरुलाई पनि सहयोग गर्नुहुन्छ । विवाहको समयमा नजिकका सबैलाई सहयोग गर्नुहुन्छ ।'

धेरै बोल्ने, अगाडि पर्ने माताजीको स्वभाव छैन । उहाँ सधैँ पछाडि रहेर, आफू नदेखिएर सहयोग गर्न रुचाउनुहुन्छ । गुरुदेवलाई उहाँले यसरी नै सहयोग गर्नुभयो भने गुरुदेवको महाप्रयाणपछि छोराहरुलाई पनि यसरी नै सहयोग गर्नुभयो ।

तर आश्चर्यको कुरा यो छ कि सधैँ नै निष्क्रिय जस्तो रूपमा रहनु भएकी माताजी अहिले एकाएक सक्रिय रूपमा आउनु भएको छ । यहाँसम्म सक्रिय कि गुरुकार्य पनि उहाँ स्वयं अघि सरेर गरिरहनु भएको छ । पत्रिका प्रकाशनको बेलामा पनि प्राय:जसो उहाँ आफै दिल्ली जानुहुन्छ (पत्रिकाको प्रकाशन दिल्लीबाट हुन्छ) । ७६, ७७ वर्षकी माता, दुईपटक मुटुको अप्रेसन भएकी माता, जीवनमा सधैँ निष्क्रिय बस्न रुचाउने माता अहिले कसरी र किन सक्रिय भइरहनु भएको छ, यो कुरा आफैमा सोचनीय छ ।

यो कुरा शिष्यहरुका लागि शुभ संकेत हो । गुरुदेवको योजना विश्वव्यापी हुनु त छँदैछ, गुरुदेवले शरीर रूपमा उद्घोष गर्नुभएको आध्यात्मिक युग त आउनु नै छ, यसको लागि गुरु स्वरूपमा, जगत्जननी माता स्वयं अघि बढ्नुहुन्छ र उहाँको नेतृत्वमा शिष्यहरुले अघि बढ्न पाउँछन् भने यो भन्दा खुशी र सौभाग्यको कुरा अरु के होला ?

प्रत्येक बिहानीको शुभारम्भ शिष्यहरुको मंगल कामनाबाट गर्ने माताजी पूर्ण रूपमा शिष्यवत्सल हुनुहुन्छ । हृदयमा सबैप्रति असीम करुणा, ममता राख्ने माताजी त्यसको अभिव्यक्ति भने गर्नुहुन्न । तथापि लुकाउँदा पनि कहिलेकाहीँ उहाँका नेत्रमा त्यो असीम प्रेम झल्किन्छ ।

माताजी बिहान उठेर चिया पिउनुहुन्छ, अखबार पढ्नुहुन्छ अनि पूजापाठमा लाग्नु हुन्छ । माताजीको अधिकांश समय पूजापाठ, भजन, स्तुतिमा नै बित्दछ । सधैँ बिहान उहाँ सूर्यको, तुलसीको, पिपलको पूजा गर्नुहुन्छ । गुरुधाम जोधपुर जाने शिष्य-शिष्यालाई माताजीको दर्शन प्राप्त गर्ने सबैभन्दा सजिलो र उचित समय त्यही नै हो किनकि त्यस समय माता बाहिर निस्कनु हुन्छ र आँगनको गमलामा भएको पिपल, तुलसीका बोटहरुको पूजा गर्नुहुन्छ, सूर्यदेवलाई जल अर्पण गर्नुहुन्छ । स्वयं जगत्जननीले एउटा सामान्य नारी सरह अत्यन्त भावभक्तिले पूजा गरिरहनु भएको दृश्य हेर्न पाउनु आफैमा ठूलो सौभाग्य हो ।

दिउँसो खाना खाने, आराम गर्ने, धार्मिक पुस्तकहरुको अध्ययन गर्ने, आवश्यक परे शिष्यहरुलाई भेटघाट गर्ने क्रम चल्दछ भने साँझमा फेरि पूजापाठ, भजन, स्तुतिमा नै उहाँको समय बित्दछ । उहाँ पूजा कोठामा एक्लै भजन गाएर आफ्ना आराध्यदेवहरुलाई सुनाउनु हुन्छ ।

गुरुदेव जस्तै माता पनि साधारण खाना मन पराउनुहुन्छ । खानामा उहाँलाई मुगीको बारा, गजरको हलुवा, खिर मनपर्छ । त्यस्तै उहाँलाई मकै र फापरको रोटी पनि मनपर्छ । फलफूलमा मेवा मनपर्छ । मातालाई कमल, गुलाफ र सयपत्रीको फूल विशेष मनपर्छ ।

गुरुदेवलाई खानामा क मनपर्थ्यो भनेर सोद्धा माताजी भन्नुहुन्छ, 'उहाँलाई मुगीको बारा (मुंगबडा) मनपर्थ्यो, मुगी, रहरको दाल मनपर्थ्यो । तर उहाँलाई खानाको सोख थिएन । जे खाना बनाएर दिए पनि खानुहुन्थ्यो । खाना मीठो भएको बेला उहाँ खाना मीठो भएछ भन्नुहुन्थ्यो, नमीठो भएको बेला उहाँ केही पनि भन्नु हुन्थेन, चूपचाप खानुहुन्थ्यो । पछि मैले खाना खाँदा नमीठो भएको थाहा पाउँथे (माताजी सधैँ गुरुदेवले खाना खानु भएपछि आफू खाना खानुहुन्थ्यो) र त्यो भन्थेँ । त्यतिखेर उहाँले भन्नुहुन्थ्यो, 'तिमीले कसरी थाहा पायौ, मैले त थाहा नै पाइनँ ।'

माताजीको भेषभूषा साधारण हुन्छ । साधारण भेषभूषामा पनि उहाँ अति सुन्दर देखिनुहुन्छ । सुन्दर त उहाँ हुनुहुन्छ नै ।

माताजीको शरीर भने कमजोर छ । पहिलेदेखि धेरै दु:ख, समस्या, कष्ट र मानसिक तनाव झेल्नु परेकोले त्यसको असर उहाँको शरीरमा परेको छ । उहाँलाई अहिले मुटुको रोग र मधुमेहको विमारी छ ।

# पूजनीय गुरुमाता आद्याशक्ति जगत्जननीको रूपमा

भगवान् शिव बिना यो सम्पूर्ण जगत मसानजस्तै हो । शक्ति बिना शिव पनि शवतुल्य हुनुहुन्छ भन्ने कुराबाट शक्तिको कति महत्त्व छ भन्ने अनुमान सहजै लगाउन सकिन्छ ।

शक्तिको अजस्र स्रोत हो नारी । प्रकृतिको सर्वोत्कृष्ट रचना हो नारी, ईश्वरको सबैभन्दा सुन्दर कृति हो नारी । नारी स्रष्टाका दूत, आमा, बहिनी, छोरीका साथै पत्नी पनि हुन् । नारी शक्तिको तुलना कसैसित पनि हुन सक्दैन । धैर्य र संयम शक्ति, सहन शक्ति, समर्पण शक्ति, विपरीत परिस्थितिहरुसँग लड्ने शक्ति र आवश्यक पर्दा दुराचारीहरुलाई समाप्त गर्ने शक्ति हुन्छ नारीमा ।

यही शक्तिले कहिले सीता र सावित्री बनेर सारा जगतलाई पातिव्रत्यको पाठ सिकाउँछ त कहिले आफ्नो सुरक्षार्थ दुर्गा, काली बनेर दुष्टहरुको सर्वनाश पनि गर्दछ । यो कुरा बताइरहन नपर्ला कि नारीलाई 'अबला' भन्नु र उसलाई कमजोर सिद्ध गर्नु उसको अनन्त शक्तिसित परिचित नहुनु हो । शारीरिक रूपमा नारी पुरुषभन्दा कमजोर देखिए पनि वास्तवमै भन्ने हो भने पुरुषभन्दा पनि शक्तिशाली र सबल हुन्छ नारी ।

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको भौतिक स्वरूप डा. नारायणदत्त श्रीमालीज्यूकी धर्मपत्नी बन्ने अद्वितीय सौभाग्य प्राप्त गर्नु हुने पूजनीय एवं परम वन्दनीय गुरुमाता सही अर्थमा सम्पूर्ण नारीत्व शक्तिको प्रतिनिधित्व गर्ने माता आद्याशक्ति भगवती जगत्जननी हुनुहुन्छ, हामी सबैकी सही माता हुनुहुन्छ ।

स्वयं सबैको आराध्यदेवी यस बेला यसै पृथ्वी ग्रहमा साकार रूपमा उपस्थित हुनुहुन्छ र विडम्बना यो छ कि हामी उहाँलाई मन्दिरमा, तस्वीरमा खोजिरहेका छौँ । कुनै पनि दिव्यात्मालाई शरीर छँदै नचिन्ने हाम्रो संस्कार नै बनिसकेको छ । भौतिक अवसानपछि भने स्तुति गरिन्छ, मन्दिर बनाइन्छ र पूजा गरिन्छ । यसको अपेक्षा त समय छँदै वास्तविकता बुझेर र व्यक्तित्व चिनेर उहाँको श्रीचरणकमलमा विसर्जित हुनु धेरै बुद्धिमानी ठहरिन्छ ।

दादा गुरुदेव श्री सच्चिदानन्द महाराजको आज्ञाले

**स्वयं विरहको आगोमा जलिरहनु भयो, सबै प्रताडना सहिरहनु भयो । नारायणलाई 'निखिलेश्वर'को रूपमा जगपरिचित गराउन सहयोग दिइरहनु भयो र गुरुदेवलाई शीर्षस्थ स्थानमा पुऱ्याएर नै छोड्नुभयो । सद्गुरुदेवकी धर्मपत्नीको रूपमा माताजीलाई जुन अन्तर्राष्ट्रिय सम्मान प्राप्त भएको छ र पछि पनि हुनेछ, ती सबैबाट हामी सबै शिष्य गर्वित छौँ ।**

---

र भौतिक शरीरलाई प्रदान गर्ने माता-पिताको ऋणबाट उत्रृण हुनका लागि सद्गुरुदेवले जसको वरण गर्नुभयो, उहाँ सामान्य स्त्री कदापि हुन सक्नुहुन्न । भगवान् सदाशिव जो गुरु रूपमा पृथ्वीमा आउनुभएको थियो, उहाँकी अर्धाङ्गिनी बन्नु साक्षात् माता जगत्जननी गौरी माता बाहेक अन्य कसको भाग्यमा हुन सक्ला ?

सद्गुरुदेवको जस्तै पूजनीय गुरुमाताको अवतरण पनि अप्रिलमा नै भएको हो (अप्रिल ८ तारीख) । उहाँको भौतिक नाम पनि भगवती नै हो जसले सर्वशक्तियुक्त जगत्जननीलाई बुझाउँछ ।

विवाहपछि सद्गुरुदेवको काँधमा आफ्नी नवविवाहिता पत्नीतर्फ ध्यान दिने जिम्मेवारी आयो । तर सद्गुरुदेवको दिव्य अवतरण जीवनलाई भौतिकतामै व्यतीत गर्नका लागि भएको थिएन । उहाँको सामु त एउटा विशिष्ट लक्ष्य, उद्देश्य थियो, धेरै ठूलो संकल्प थियो– हाम्रा ऋषिमुनिहरुका लुप्त विद्यालाई पुन: खोजी निकाल्ने र सम्पूर्ण विद्यालाई पुनर्जीवन दिने, आफ्ना जन्म-जन्मदेखिका शिष्यहरुलाई एकत्र गर्ने र उनीहरुकै माध्यमबाट सम्पूर्ण विश्वलाई साधनात्मक प्रकाश प्रदान गर्ने ।

गृहस्थ जीवनमा आएपछि पनि गुरुदेवको आत्मा छट्पटाइरहेको थियो कि उहाँको जीवन भौतिकतामा सीमित गरेर व्यतीत गर्नका लागि होइन । आफ्नो जीवनमा जे गर्नुछ, त्यो गृहस्थ भई बसेर हुन सक्दैन भन्ने आफ्नो हृदयको आवाज आफ्नी धर्मपत्नीलाई बताउँदा उहाँमाथि यो कुरा बिजुली बनेर गिऱ्यो । फेरि गुरुमाताको सामान्य विरोधपछि गुरुदेवले विजय हासिल गर्नुभयो, माताजीको स्वीकृति प्राप्त भयो । गुरुदेव आफ्ना लागि नभई लोक कल्याणका लागि अज्ञात बाटोमा हिँड्नुभयो, हाम्रो ज्ञानको भण्डार हामीलाई नै सुम्पनका लागि हिँड्नुभयो ।

आफ्ना नवविवाहित पतिलाई घर छोडेर जाने सल्लाह दिने, संन्यास जीवन बिताउन प्रेरित गर्ने र आफू स्वयं बिछोडको आगोमा जलिरहने महान् कार्य सामान्य स्त्रीले गर्न सक्दिनन् । तर माताजी सामान्य नारी हुनुहुन्न । उहाँ त वीराङ्गना हुनुहुन्छ, जगदम्बा हुनुहुन्छ र नित्य लीलाविहारिणीको इच्छानुसार नै गतिशील हुनुहुन्छ । माताजीले चाहनु भएको भए सद्गुरुदेवलाई संन्यास जीवनमा जानबाट रोक्न पनि सक्नुहुन्थ्यो, आफ्नो जीवनको स्वार्थ देखाएर उहाँलाई नजानका लागि विवश पनि गर्न सक्नुहुन्थ्यो, जगतका पिता होइन, जगतगुरु होइन सामान्य गृहस्थ जस्तै आफ्ना बच्चाहरुका पिता बनाउन सक्नुहुन्थ्यो ।

तर उहाँले यस्तो गर्नुभएन । स्वयं विरहको आगोमा जलिरहनु भयो, सबै प्रताडना सहिरहनु भयो । नारायणलाई 'निखिलेश्वर'को रूपमा जगपरिचित गराउन सहयोग दिइरहनु भयो र गुरुदेवलाई शीर्षस्थ स्थानमा पुऱ्याएर नै छोड्नुभयो । सद्गुरुदेवकी धर्मपत्नीको रूपमा माताजीलाई जुन अन्तर्राष्ट्रिय सम्मान प्राप्त भएको छ र पछि पनि हुनेछ, ती सबैबाट हामी सबै शिष्य गर्वित छौँ ।

जहाँ एउटा आदर्श पत्नीको रूपमा गुरुमाता सबैभन्दा अगाडि रहनुभयो, त्यहीँ एउटी आमाको रूपमा पनि उहाँ वात्सल्यकी प्रतिमूर्ति मानिनुहुन्छ । उहाँको सान्निध्यता प्राप्त गर्ने थुप्रै शिष्यहरुको अनुभव रहेको छ कि उहाँको प्रेम र मातृत्व सुख अन्त कतै प्राप्त हुन सम्भव छैन । आज पनि उहाँसँग स्नेह प्राप्त ती मानसपुत्रहरुलाई पूजनीय गुरुमाता स्मरण गरेर भावविह्वल बन्नुहुन्छ ।

हामी सबै शिष्य र साधकहरुको अद्वितीय सौभाग्य हो कि हामीले यस्ती ममतामयी गुरुमातालाई प्राप्त गरेका छौँ र उहाँको चरणको धूलो हामीलाई सौभाग्य बनिरहेको छ । सबैभन्दा ठूलो कुरो यो हो कि सिद्धाश्रम शक्ति केन्द्रलाई दुई गुरुहरुका साथै माताजीको पनि सूक्ष्म आशीर्वाद प्राप्त छ । यो सबैका लागि आनन्ददायक र गौरवको विषय हो ।

जय गुरुदेव !

*(बडा दुखी मन से कहना पड रहा है की **मंत्र-तंत्र-यंत्र विज्ञान** पत्रिका आज प्रत्येक स्थलों, घरों, दोकानों मे आना बन्द हो गयी है । परमपूज्य सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमालीद्वारा उठाया गया गीता रूपी इस पत्रिका का बन्द होना हम सबकी दुर्भाग्य है । इससे पूजनीया माताजी भगवती देवी श्रीमाली की हृदय मे बहुत आघात पहुँचा है । माताजी ने इस आघात को जीवन की दूसरा आघात कहा है । हम सभी माताजी की इस आघात के कारण दु:खी है । इस आघात के क्षणों में हम सभी शिष्यों उनके साथ हैं और माताजी को चिन्ता करने की कोई जरुरी नहीं है । हमारे लिए यह सौभाग्य कि बात है कि माताजी द्वारा सद्‌गुरुदेव प्रदत्त **नारायण मंत्र साधना विज्ञान** का प्रकाशन आरम्भ हो चुकी है । उक्त पत्रिका के प्रथम अंक में माताजी द्वारा गुरुदेवका कार्य को आगे बढाने के लिए शिष्यों को जो आह्वान किया है, वह आह्वान चारों ओर और फैलें, इसी प्रेरणा से अभिभूत होकर **नारायण मंत्र साधना विज्ञान** में प्रकाशित माताजी का शुभाशींवचन **गोरक्ष निखिल वाणी** में भी प्रस्तुत हैं)–*

---

आत्मीय पुत्र एवं पुत्रियों,
शुभाशीर्वाद.....

गुरु पूर्णिमा हरिद्वार शिविर में आप सभी का प्यार और उत्साह, हर-हर महादेव की ध्वनि और सद्‌गुरुदेव की जय-जयकार सुन कर एवं देखकर मैं इतनी आनन्द से भाव विह्वल हो गई थी कि आप सबको आशीर्वाद देते हुए मेरे मुख से शब्द भी नहीं निकल रहे थे। परन्तु उसके कुछ दिनों पश्चात् ही मुझे जो आघात दिया गया, जो उथलपुथल देखने को मिली उससे मैं बहुत व्यथित हो गई। क्योंकि जो मंत्र-तंत्र-यंत्र विज्ञान पत्रिका सद्‌गुरुदेव ने 30 वर्ष पूर्व शुरु की थी यह उनकी आत्मा थी। इसे उन्होंने अपने खून से सींचते हुए आगे बढाया। अपने स्वास्थ्य तक का भी ख्याल नहीं रखा। आज महत्वाकांक्षाओं की वजह से इस पत्रिका रुपी वृक्ष का मुरझा जाना मेरे जीवन में दूसरा सबसे बडा आघात है। आघात मुझे तब लगा था जब सद्‌गुरुदेव सिद्धाश्रम गमन कर गये थे और दूसरा आघात आज लगा है। इन क्षणों में मुझे सद्‌गुरुदेव की वह बात याद आ गई है, जो उन्होंने मुझे एक शिविर में कही थी कि माताजी एक समय ऐसा आयेगा जब कुछ ऐसी घटनाएं घटेंगी कि तुम्हें इसका संचालन स्वयं करना पडेगा तब तुम्हें अडिग खडे रहना है। यह शिष्य रुपी दीपक जो मैं आज प्रज्वलित कर रहा हूँ यह सब आगे बढकर मेरी इस ज्ञान चेतना को आगे बढाने में आपके साथ खडे रहेंगे। आपको सिर्फ इतना करना है कि आगे बढकर इन्हें दिशा देनी है।

सद्‌गुरुदेव ने कहा था कि मैं अपने शिष्यों को उत्तराधिकार में अपनी चेतना, अपनी बेबाकी और अपनी तेजस्विता दे रहा हूँ, हमें उसी उत्तराधिकार रुप में प्राप्त कलयुग की गीता रुपी मंत्र-तंत्र-यंत्र विज्ञान पत्रिका के पहिये आज जाम कर दिये गये हैं। उन्होंने एक बार शिविर में शब्दों का महत्व बताते हुए कहा था कि शब्द वही हैं लेकिन उनका प्रयोग कैसे किया जाय कि सामने वाले पर तीक्ष्ण प्रभाव पडे। अत: मंत्र-तंत्र-यंत्र सिर्फ शब्द नहीं है। यह एक मंत्र के समान हैं परन्तु आज किन्हीं कारणों वश इन शब्दों का स्थान दूसरों शब्दों ने ले लिया है। तुम्हारे गुरुदेव के निर्देश से पत्रिका हेतु जो शब्द मुझे प्राप्त हुए हैं उन्हीं शब्दों से पत्रिका का नया नाम 'नारायण

हैं। क्योंकि गुरु द्वारा सौंपा गया कार्य व्यक्तिगत स्वार्थ से ऊपर होता है और ऐसा कार्य करने वाले शिष्य ही इतिहास में अपना नाम लिखवाते हैं और वे ही सद्गुरुदेव निखिल की प्रसन्नता प्राप्त करते हैं।

ऐसा समय बार-बार नहीं आता कि जब गुरु स्वयं सेवा का अवसर शिष्य को प्रदान गरे। शिष्य के लिए गुरुधाम की आज्ञा, माँ की आज्ञा से बडी कोई आज्ञा नही हो सकती। उसके लिए गुरुधाम से बडा कोई मन्दिर नहीं हो सकता। जहाँ सद्गुरुदेव ने स्वयं निवास किया हो वह जोधपुर हो या सिद्धाश्रम दिल्ली। यह वही स्थान है जहाँ पर सद्गुरुदेव ने करोडों-करोडों मंत्र जाप कराये। न जाने कितनी अनगिनत साधनायें आपको सम्पन्न कराईं। जहाँ की माटी के कण-कण में उनके चरणों की सुगन्ध बसती है। इस माटी को आप सभी अपने माथे पर लगाने में अपना सौभाग्य समझते हैं। क्या कोई अन्य स्थान गुरुधाम जोधपुर या सिद्धाश्रम दिल्ली की बराबरी कर सकता है।

मंत्र साधना विज्ञान' रखा जा रहा है।

आज समय आ गया है कि सद्गुरु द्वारा प्रदत्त की गई तेजस्विता का उपयोग सद्गुरु प्रदत्त इस 'नारायण मंत्र साधना विज्ञान' पत्रिका को जन-जन तक पहुँचाया जाय। यह आप सभी शिष्यों का कर्तव्य है। कुछ ऐसे शिष्य भी होते हैं जो 'पादपद्म' की तरह अपने स्वार्थ के लिये विश्वास तोड कर अपनी राह बदलने में भी किसी प्रकार का संकोच नहीं करते उनके लिये प्यार, स्नेह, विश्वास की कोई अहमियत नहीं होती। उनके लिये पैसा ही सब कुछ होता है।

आप कैसे भी हैं मेरे पुत्र हैं। मेरा आशीर्वाद देता हुआ हाथ सदैव पुत्रों के कल्याण के लिए ही उठता रहा है। हमेशा आशीर्वाद ही दिया है मैंने आप सबको। परन्तु आज सद्गुरुदेव की ओर से आशीर्वाद प्रदान करते हुए तुम सबको 'माँ' के रुप में यही मेरी आज्ञा है कि हम सब को सद्गुरुदेव द्वारा लगाये गये इस वृक्ष को फिर से हरा-भरा करना है। कौन कितना योगदान देता है आज मैं यही देखना चाहती हूँ। हमेशा आशीर्वाद और स्नेह प्रदान करने वाली एक माँ की आँखें आज इस क्षणिक ग्रहण काल में यही देखना चाहती हैं कि सद्गुरु द्वारा आपको प्रदान की गई तेजस्विता का उपयोग आज आप उन्हीं के कार्य के लिए कितनी तन्मयता और उत्साह से करते

अत: आज इन घात-प्रतिघात के क्षणों में मेरा तुम सभी शिष्यों से आह्वान है कि विचलित होने की आवश्यकता नहीं है। अब सद्गुरुदेव से प्राप्त निर्देशों के अनुसार पत्रिका मेरे निर्देशन में उसी तरह प्रतिमाह आपको भेजी जाती रहेगी जिसका सम्पादन का कार्य अरविन्द करेगा और आप सभी को पत्रिका के माध्यम से मेरा आशीर्वाद सदैव मिलता रहेगा।

अरविन्द को सम्पूर्ण ह्रदय से मेरा आशीर्वाद है वह सद्गुरुदेव द्वारा प्रदत्त इस कार्य को धैर्य, साहस एवं तत्परता से निभायेगा और आप सभी के सहयोग से यह कार्य द्रुतगति से आगे बढ़ता रहेगा-ऐसी मेरी कामना है।

सभी को मेरा प्यार एवं आशीर्वाद।

भगवती
तुम्हारी माता

# माताजीको आदेशलाई शिरोपर गर्नु हाम्रो धर्म हो

– अरविन्द गुरुदेव

संसारमा शक्ति नै यस्तो तत्त्व हो जसको महिमा सबैले गाएका हुन्छन् । झन् माताको शक्ति त व्यक्तिमा सदासर्वदा सर्वश्रेष्ठ रूपमा रहेको हुन्छ । मेरो सन्दर्भमा भन्ने हो भने यो मेरो परम सौभाग्य हो कि माताजीको शक्ति सधैं मेरो साथमा प्रत्यक्ष रूपमा रहेको छ । माताजीको शक्ति अनायास आउने भने होइन । यसका लागि तपस्या गनु पर्ने हुन्छ, त्याग गर्नु पर्ने हुन्छ । माताको ममता पाउनका लागि छोराले पनि काम गर्नु पर्ने हुन्छ । यदि छोराले काम गर्दैन भने माताले पनि छोरालाई गाली गर्नु, हप्काउनु स्वभाविक हो ।

माताजीले मलाई हरेक समय काम गर्नका लागि अह्राउनु भएको छ । उहाँले असीम सम्भावनातिर औंल्याउनु हुँदै बाहु फैलाएर बसेको विश्वतिर लक्षित गर्नुभएको छ । धेरै टाढा टाढाका मानिसहरुसित यहाँ आई ज्ञान प्राप्त गर्न साधनहरु पनि नहुने हुनाले उनीहरु कहाँ आफै जानु पर्ने माताजीको आदेश छ । प्राप्त ज्ञानबाट आफूलाई माथि उठाउन सकून् भनेर प्रत्येक साना साना दुर्गम क्षेत्रमा गएर ज्ञान बाँड्ने माताजीको आदेशानुसार नै यो कार्य भइरहेको छ ।

परमपूज्य सद्गुरुदेवले हामीलाई सिकाउनु भए अनुसार शिष्यको धर्म यही हो कि हामी सबैले ज्ञान प्राप्त गर्नुछ, जीवनमा भौतिक उन्नति प्रगतिका साथसाथै आध्यात्मिक उन्नति, प्रगति गर्नु पनि हाम्रो लक्ष्य हुनुपर्छ । गुरुदेवले भन्नुभएको छ कि भौतिक संसारमा केवल पैसाको माध्यमबाट मात्रै हाम्रो चिनारी हाओस् भन्ने हाम्रो लक्ष्य हुनुहुन्न । हामीसित धन होस्, ऐश्वर्य होस् भन्ने मात्रै गुरुदेवको उद्देश्य थिएन । उहाँले त हामीलाई प्रज्ञावान्, ज्ञानवान्, चेतनावान् बनाउन चाहनुहुन्छ । हाम्रो यश, कीर्ति हामीसित भएको पैसाद्वारा नभई हाम्रा कार्यहरुबाट, हाम्रा साधनाहरुबाट, हाम्रो हृदयबाट, हाम्रो ज्ञानबाट आओस्, शक्ति आओस् भन्ने गुरुदेवले हामीलाई सधैं सिकाउनुभयो । यसैलाई अगाडि बढाउनु छ । शिष्यहरुले केवल भौतिक पक्षलाई मात्रै नभएर आध्यात्मिक पक्षमा पनि कार्य गर्नुपर्दछ ।

माताजीले जे आदेश दिनुहुन्छ, त्यसलाई अक्षरश: पालन गर्नुपर्छ । माताजी हाम्रा लागि **निखिल स्वरुप**मा हुनुहुन्छ, **सजीव रुपमा नारायण स्वरुपा हुनुहुन्छ** किनकि माताजीले पनि त्याग गरेर हजारौं-हजार साधना गरेर नारायणलाई पाउनुभएको हो । जसलाई पाउनका लागि, जसको दर्शनका लागि मानिसहरु तड्पिन्छन्, माताजीले त उनै नारायणलाई पतिको रूपमा पाउनुभयो । जसरी गौरीले साधना गरेर भगवान् शंकरलाई प्राप्त गर्नुभएको थियो, जसरी लक्ष्मीले साधना गरेर श्रीविष्णुलाई पाउनुभएको थियो, त्यसरी नै विदुषी माता भगवतीले पनि साधना गरेर नारायणलाई पति रूपमा वरण गर्न पाउनु भयो । जसको एक झलक

दु:ख, कष्टबीच एउटै सहारा, एउटै खुशी गुरुदेव हुनुहुन्थ्यो। गुरुदेवको प्रसिद्धि पनि बढ्दै गयो। अध्यापकको रूपमा उहाँ राम्रोसँग प्रतिष्ठित हुनुभयो र उहाँको पारिश्रमिक पनि राम्रो भयो। त्यसबाट घरमा अनुकूलता आउन थाल्यो।

तर सुखका दिन आउँदा आउँदै गुरुदेव फेरि संन्यास यात्रातिर लाग्नुभयो। फेरि अभाव र समस्याको भूमरीमा माताजी पर्नुभयो। पहिले दु:ख, कष्ट भए पनि गुरुदेवको सहारा थियो तर पछि त्यो पनि भएन। एक त पति वियोगको पीडा त्यसमाथि आफ्नो अगाडि अभाव र प्रतिकूलता सिवाय केही पनि थिएन। तर पनि माताजी सहनशील बनिरहनुभयो, धैर्य धारणा गरिरहनुभयो।

यो सहनशीलता र धैर्यको प्रतिफल माताजीले पछि पाउनुभयो। संन्यास यात्राबाट फर्किएपछि गुरुदेवको कार्य अघि बढ्दै गयो, सफलता र प्रसिद्धि हासिल हुँदै गयो र उहाँले आफ्नो सफलताको धेरै श्रेय आफ्नी धर्मपत्नीलाई दिनुभएको छ। संन्यास यात्राको समयमा माताजीलाई लेख्नुभएको एउटा चिठीमा उहाँले लेख्नुभएको छ, 'तिम्रो त्याग मेरो त्यागभन्दा धेरै ठूलो छ। तिम्रो त्यागको प्रकाशमा नै म अघि बढेको हुँ। मेरो पछाडि तिम्रो धेरै ठूलो संबल छ, तिम्रो प्रेरणा र शक्ति छ।' त्यस्तै उहाँले आफ्नो 'निखिलेश्वरानन्द चिन्तन' भन्ने पुस्तकमा लेख्नुभएको छ–

'ती दिन उसका खाने खेल्ने दिनहरु थिए, मैले उसलाई व्यथा, एकान्त एवं पति विमुखता दिएँ। म आज पनि यी देवीको व्यक्तित्वप्रति कृतज्ञ छु। मेरो लागि यिनले जति दु:ख, समस्या र व्यथा उठाएकी छिन् त्यति कम स्त्रीले उठाएका होलान्... र यदि स्पष्ट शब्दमा भनूँ भने जति ऋण मेरा पूज्य गुरुदेवको म प्रति छ... त्यो भन्दा कम ऋण मेरी पत्नीको छैन। आज म जे बनेको छु... त्यो यी दुई व्यक्तिहरुको कारण नै बनेको छ। यस्तो भन्न मलाई कुनै संकोच छैन, कुनै अप्ठ्यारो छैन।'

गुरुदेव उच्चतम व्यक्तित्व हुनुहुन्छ, यस विश्व ब्रह्माण्डका अधिपति हुनुहुन्छ भने उहाँकी धर्मपत्नी बन्ने सौभाग्य प्राप्त गर्ने नारी अवश्य नै सामान्य हुनुहुन्न। वास्तवमा माताजी गुरुदेवको शक्तिको प्रकटीकरण हुनुहुन्छ। जहाँ भगवान् शिव हुनुहुन्छ, त्यहाँ स्वत: नै माता पार्वती हुनुहुन्छ, जब विष्णु भगवान् अवतरित हुनुहुन्छ, माता लक्ष्मी पनि स्वत: अवतरित हुनुहुन्छ। त्यस्तै जहाँ ब्रह्मस्वरूप सद्गुरुदेव हुनुहुन्छ त्यहाँ स्वत: नै शक्तिस्वरुपिणी माताजी हुनुहुन्छ। माताजी साक्षात् भगवती हुनुहुन्छ, जगत्जननी हुनुहुन्छ।

तर माताजीको भेद पाउन मुश्किल छ। उहाँले सधैं नै आफूलाई एक साधारण नारीको रूपमा प्रस्तुत गर्नुभएको छ। माताजी कम बोल्नुहुन्छ, हरेक कुरामा अन्जान बनिदिनुहुन्छ। साधना, ध्यानमा भने उहाँ कृपा बर्षाउनु हुन्छ, आफ्नो वास्तविक स्वरूपमा दर्शन दिनुहुन्छ। असाधारणपनले गर्दा नै उहाँले गुरुदेवलाई संन्यास यात्रामा पठाउनुभयो। अन्यथा साधारण नारीको वशको कार्य त्यो थिएन।

आफ्ना गुरुदेवको आज्ञा शिरोधार्य गर्दै गुरुदेव गृहस्थीमा फर्कनु भएपछि उहाँ यति व्यस्त रहनुभयो कि माताजीले पतिको सहचार्य विरलै मात्र पाउनुभयो। तर माताजीले यस कुराको गुनासो गर्नुभएन किनकि जगतजननी मातालाई थाहा थियो कि ती सबै कार्य गर्नको लागि नै गुरुदेवकोअवतरण भएको छ र ती कार्यमा अप्रत्यक्ष रूपमा सहयोगी बन्नको लागि नै उहाँ स्वयं अवतरित हुनुभएको छ। यस बारेमा मातासँग प्रश्न गर्दा अत्यन्त सामान्य रूपमा उहाँले उत्तर दिनुभयो– 'गुरुजीको काम समाजको लागि थियो। त्यस काममा मैले बाधा ल्याइनँ। उहाँलाई उहाँको कार्य गर्नबाट मैले कहिले पनि रोक्ने कोशिश गरिनँ।'

गुरुदेव घरमा बसेर पनि घर परिवारको हुनु हुन्थेन, गृहस्थीमा बसेर पनि मनको संन्यासी हुनुहुन्थ्यो। उहाँ भन्ने

गर्नुहुन्थ्यो, 'मेरो जीवन स्वयंको लागि वा परिवारको लागि होइन, मेरो जीवन त शिष्यहरुको लागि हो, मेरो जीवनको उद्देश्य त शिष्यहरुलाई पूर्णता दिने प्रयास हो ।' यस्ता विदेह गुरुदेव र घर परिवारबीच तालमेल मिलाउन माताजीलाई मुश्किल त अवश्य नै भयो । उहाँलाई परेको अप्ठ्यारोको, उहाँलाई समय दिन नपाएको कुराको आभाष गुरुदेवलाई पनि हुन्थ्यो । त्यसैले कहिलेकाहीं गुरुदेव माताजीलाई घुमाउन लानुहुन्थ्यो– कसैलाई पनि नभनीकन, शिष्यहरुलाई चालै नदिइकन । तर पनि शिष्यहरुले कहाँ कहाँबाट गुरुदेवलाई देखिहाल्थे र टाढैबाट 'गुरुजी' भनेर चिच्याउँदै आइपुग्थे । एउटा शिष्यले थाहा पाएपछि अरु शिष्य पनि आइपुगिहाल्थे र घुम्ने योजना त्यसै हराउँथ्यो ।

त्यस्तै समयको स्मरण गर्दै माताजी भन्नुहुन्छ, 'एकपटक गुरुजी र म सिमला गएका थियौं । बाटोमा (एयरपोर्टमा) एकजना शिष्यले देखे । गुरुजीलाई अचानक देखेर उनी धेरे खुशी भए । खुशीले गद्गद् भएर सिमलाको राम्रो स्याउ धेरै किनेर ल्याए । हाम्रो अगाडि स्याउको थुप्रो लाग्यो । हामी दुईजना मात्रै थियौं, त्यत्रो स्याउ के गर्ने ? त्यसमध्ये हामीले केही लियौं र अरु त्यहीं छाडिदियौं ।'

माताजी बाल्यावस्थाबाट नै भगवान् श्रीकृष्णको भक्ति गर्नुहुन्थ्यो । उहाँको पूजा कोठामा अहिले पनि भगवान् श्रीकृष्णको नै फोटो छ । उहाँ एकादशी, पूर्णिमा आदि आदिमा धेरै व्रत बस्नुहुन्छ । उहाँको अधिकांश समय पूजापाठ, भगवान्को आराधना, चिन्तनमा नै बित्दछ । उहाँलाई भजन धेरै मनपर्छ । उहाँलाई विशेष गरेर वैराग्य भजन मनपर्छ । उहाँ आफू पनि भजन गाउनुहुन्छ । उहाँ भजन पनि आफ्ना आराध्यदेव भगवान् श्रीकृष्ण र भगवान् रामसम्बन्धी नै गाउनुहुन्छ ।

माताजीलाई मनपर्ने अर्को कुरा हो 'दान' । उहाँ धेरै दानी हुनुहुन्छ र दान पनि यसरी गर्नुहुन्छ कि त्यसको जानकारी उहाँका वरिपरिका व्यक्तहरुलीई पनि हुँदैन । दीन दुःखीहरुलाई फलफूल, खाद्य, सामग्री, लत्ता कपडा उहाँ समय समयमा दिइरहनु हुन्छ, कति अनाथ बच्चाहरुलाई उहाँले गोप्य रूपमा पढाइरहनु भएको छ । उहाँ अत्यन्त कोमल स्वभावकी हुनुहुन्छ । अरुको दुःख, समस्याले उहाँलाई दुःखी बनाउँछ र त्यस्तो अवस्थामा उहाँ आफ्नो तर्फबाट हर सहयोग गर्न तयार हुनुहुन्छ ।

सन् १९९७ मा 'श्रीमाली समाज' भन्ने पत्रिका मा अन्तर्वाताको क्रममा गुरुदेवले भन्नुभएको छ– 'मेरी पत्नी भगवती देवी एक संस्कारवान्, धर्मपरायण महिला छिन् । यो मेरो सौभाग्य हो कि यस्ती उच्चकोटिकी पत्नी मलाई प्राप्त भइन् । भगवान्सँग मेरो यही आकांक्षा छ कि यदि

मलाई अर्को जन्म लिन पर्‍यो भने पनि यस्तै पत्नी  मिलून् किनकि दुःखका दिनहरुमा यिनले मलाई धेरै साथ दिएकी छिन्, हिम्मत दिएकी छिन्, अघि बढ्ने प्रेरणा दिएकी छिन् । सबैभन्दा ठूलो कुरा यो हो कि यिनले मलाई धार्मिक र आध्यात्मिक कार्यमा सहयोग गरेकी छिन् । पछिल्ला पचास वर्षमा हामी पति-पत्नीबीच तनाव वा झगडा भएको कुनै पनि क्षण आएन, त्यो उनको सहनशीलता र मेरो सौभाग्य हो ।'

युगपुरुषको दाम्पत्य जीवन अत्यन्त सफल रह्यो, यसकोपछाडि माताजीको सहनशीलता नै लुकेको छ । जीवनमा दुःख कष्टको सामना मात्र होइन, उहाँले पुत्र वियोगको पीडा पनि झेल्नु भएको छ । २१ वर्षको जवान छोराको देहान्त हुँदा आमाको हृदयलाई कस्तो आघात पर्‍यो होला । यस्ता दुःख, व्यथा सहँदा सहँदा माताजी धेरै बलियो भइसक्नु भएको छ । उहाँ भन्नुहुन्छ, 'म कुनै पनि कुरामा टेन्सन लिन्न ।'

माताजीसँग कुरा गर्दा उहाँ गुरुदेव जस्तो विराट व्यक्तित्वको धर्मपत्नी हुनुभएको, साक्षात् जगत्जननी हुनुभएको कुराको उहाँले रत्तिभर पनि आभाष हुन दिनुहुन्न । यो नै उहाँको सबैभन्दा ठूलो गुण हो । उहाँ अत्यन्त सामान्य रूपमा कुरा गर्नुहुन्छ । उहाँसँग कुरा गर्दा यस्तो लाग्छ कि उहाँ 'माताजी' नभएर आफ्नो घरकी आमा हुनुहुन्छ । वास्तविक रूपमा उहाँ सम्पूर्ण शिष्यहरुकी आमा नै त हुनुहुन्छ । आमाकै रूपमा उहाँले सम्पूर्ण शिष्यहरुको  भित्री पोषण गरिरहनु हुन्छ ।

दादा गुरुदेवले गुरुदेवलाई भन्नुभएको थियो– माताजीलाई आफ्नी धर्मपत्नीको रूपमा मात्र नदेखेर आद्याशक्तिको रूपमा पनि देख्नू । तसर्थ गुरुदेवले सदा नै माताजीको सम्मान गर्नुभयो । शिविरहरुमा गुरुदेवले माताजीलाई सदा ने आफ्नो दाहिनेतर्फ राख्नुहुन्थ्यो र यो कुरा माताजीको मात्र सम्मान थिएन, सम्पूर्ण नारी जगतको सम्मान थियो, माता जगदम्बिकाको सम्मान थियो ।

त्यसैले बाहिरबाट अत्यन्त सामान्य नारीको रूपमा प्रतीत हुने माताजी त्यस्ती व्यक्तित्व हुनुहुन्छ जसको सम्मान स्वयं गुरुदेवले गर्नुभएको छ, जसको सम्मान स्वयं दादा गुरुदेवले गर्नुभएको छ ।

जय गुरुदेव !

## बालहठ से सत्य का उद्घाटन

# तू अम्बे, तू जगदम्बे, तू माता जगजननी

सन् १९७२ की बात है, उस समय अरविन्द गुरुजी बालक ही थे। बाल सुलभ मन तो जिज्ञासू होता ही है, अन्य बालकों की तरह अरविन्द जी के मन में कोई प्रश्न उठता तो वे भी उसका उत्तर प्राप्त करके ही मानते थे, बचपन में वे हठी रहे हैं।

उन दिनों सद्गुरुदेव डा. नारायण दत्त श्रीमाली जी से मिलने दूर-दूर से व्यक्ति आते थे और अपनी समस्याओंका और साधनात्मक प्रगति आदि की चर्चा करते और समाधान पाकर वापस लौट जाते थे। यदा-कदा कुछ संन्यासी भी पूज्य गुरुदेव से मिलने आया करते थे। इसी तरह एक बार एक संन्यासी पूज्य सद्गुरुदेव के दर्शन करने आया था, काफी देर से द्वार पर बैठा था, वहीं बगीचे मे बालक अरविन्द अकेले ही खेल रहे थे। खेल में मगन थे, कि तभी वह संन्यासी आकर बालक के चरण स्पर्श करता हुआ साष्टांग दण्डवत प्रणाम करने लगा। बालक अरविन्द को यह पसन्द न आया। एक बढी उंम्र का व्यक्ति एक बच्चे के चरण छुए, ये बात बालक को कुछ ठीन न लगी।

बालक ने संन्यासी से पूछा– 'आप मेरे पैर क्यों छू रहे हैं? आप तो मुझसे बडे हैं !'

संन्यासी बोला– 'आप कोई साधारण बालक थोडे ही हैं, आप तो साक्षात भगवान नारायण और मां जगदम्बा के पुत्र हैं।'

'मेरी मां जगदम्बा नहीं, वे तो घर में हैं।' बालक ने भोलेपन से कहा।

संन्यासी बोला– 'हां वे ही मां दुर्गा, काली, जगदम्बा सभी कुछ हैं, जगद्जननी हैं। संन्यासी झूठ नहीं बोलते।'

यह बात बालक के दिमाग में बैठ गई। संन्यासी तो चला गया, परन्तु बालक के मन में एक तूफान पैदा कर गया। रात भर बालक सो न सका, वह संन्यासी के वाक्य का ही स्मरण कर रहा था। पिताश्री सद्गुरुदेव से कुछ पूछने का साहस था नहीं। अगले दिन सुबह वह पूजनीय माताजी के साथ मन्दिर जाने लगा। उस दिनों घर से कुछ दूर पर एक मन्दिरमें नियमित रुपसे पुष्प, धूप, प्रसाद आदि चढाने जाती थीं। तीनों भाइयों में से कभी कोई तो कभी कोई माताजी के साथ जाते थे। उस दिन मन्दिर में माताजी ने मन्दिर की मूर्तियों की पूजा तथा नित्य की भांति वापस आने लगीं।

बाल हठ तो प्रचलित है ही, बालक अरविन्द वापस आने को तैयार नहीं, मन्दिरमें खडे रहे, जैसे आज पूरी जिद में ही थे। माताजी ने कई प्रकारसे प्रलोभन दिया, डांटा, फुसलाया परन्तु कोई असर नहीं। माताजी बोलीं– 'क्या बात है बेटा, आज तुझे क्या हो गया है, घर क्यों नहीं चलता ?'

बालक अरविन्द बोले– 'पहले तुम ये बताओ, कि तुम हो कौन? तभी मैं घर चलूंगा।'

माताजी बोली– 'अरे बेटा मैं कौन ! मैं तो तेरी मां हूं, और कौन हूं ?'

–'नहीं ! आप मुझसे झूठ बोल रही हैं।' बालक रुठ कर बोला।

–'मैं झूठ क्यों बोलूंगी, अरविन्द ? मैं तेरी मां नहीं तो ओर कौन हूं भला ? क्या तुझे मुझपर विश्वास नहीं ?'

बालक ने तो जैसे आज माताजी के मुख से सच्चाई निकलवाकर ही घर लौटने की कसम खाली थी। वह मन्दिर से चलने का वापस नाम ही न ले। बालक ने संन्यासी वाली बात बताई, तो माताजी को स्वीकार करना ही पडा और वे बोली–

'बेटा, तुमने ठीक ही सुना है, तेरे पिता साक्षात नारायण हैं, और मैं जगदम्बा हूं, मन्दिर में ये मेरी ही मूर्ति है, अब घर चल।'

बालक बोला– 'जो तुमने कहा है, वही पहले मन्दिर में शिवजी की मूर्ति को छू कर कहो।' माताजी को बालहठ के सामने झुकना पडा, और उन्होंने दुबारा उस बात को दोहराया। बालक का सन्देह अब मिट चुका था, अब वह प्रसन्नता से माताजी के साथ घर जा रहा था।

सद्गुरुदेव ने तो अपने स्वरुप का आभास तो अनेकों को अनेक बार दिया है, परन्तु माताजी ने अपने को सदा-सर्वदा छिपाए ही रखा है, परन्तु वे अप्रत्यक्ष रुप में भी गुरुदेव के सभी शिष्यों का कल्याण करती रहती हैं। अपने जगतजननी जगदम्बा होने की बात उन्होंने कहीं और नहीं बताई। ये ही एक ऐसी घटना थी, जहां उन्हें अपने मुख से सच्चाई बाल हठ से विवश हो कहनी पडी थी।

(मंत्र-तंत्र-यंत्र विज्ञान, सेप्टेम्बर, २०९९)

## माताको आशीर्वाद

–बालकृष्ण श्रेष्ठ

तिम्रो भक्तिको अनन्त महिमा भजी सच्चा भक्त बनूँ<br>
तिम्रो महिमा अतुल्य छन् बुझी सच्चा सेवक बनूँ।<br>
मार्ग शून्य नैराश्य अवस्थामा माताकै भर परूँ<br>
माताको आशीर्वाद लिई यो जीवन सफल पारूँ॥

माताको दिव्य शक्ति स्नेह जीवनोपयोगी बनोस्<br>
माताको भक्ति, पूजन संसारको ऐश्वर्य बनोस्।<br>
सम्झिरहन्छु केही नसोची माताकै अनन्त विभूति मनमा<br>
तिमै भक्तिमा नै रमाएको छ जगत अनन्त ब्रह्ममा॥

# श्री पशुपतिनाथ

पशुपति क्षेत्र काठमांडू शहर के पूरव की ओर है। इसके नजदीक ही त्रिभुवन विमान स्थल है। यह वागमती के तट पर है। आजकल काठमांडू को चारों तरफ से घेरने वाली चौडी रिंगरोड के देवपत्तन के चौराहे पर पहुँच कर दाईं ओर एक सडक सीधी एयरपोर्ट को गई है और इसके साथ की सडक ढलान में चली हुई पशुपति मंदिर की ओर गई है। इसकी बाईं ओर पशुपति गौशाला है और दाईं ओर गहरा खड्ड है। इस सडक पर एक फर्लांग चलते हुये एक छोटा सा चौराहा आता है। सीधा जाने से गुह्येश्वरी मंदिर पहुँचा जाता है और दाईं ओर मुडकर पशुपति मंदिर की ओर जाया जाता है। यहीं से दोनों तरफ पशुपति की पूजा सामग्री फूल, माला, बेल-पत्र, रुद्राक्ष, चित्र एवं अन्य धार्मिक वस्तुयें बेचने वालों की दुकाने हैं। फूल-पत्र बेचने वाले के यहाँ ही जूते उतारने होते हैं।

श्री पशुपति मंदिर में केवल हिन्दू ही प्रवेश कर सकते हैं। चमडे की वस्तुयें भी अंदर नहीं ले जाई जा सकतीं। अंदर फोटो लेने की भी मनाही है अत: कैमरा या चमडे की वस्तु मुख्य द्वार से बाहर ही छोडनी हैं। इस मंन्दिर की शोभा मंदिर के पूर्व भाग से वागमती के पूर्वी तट से भी देखी जा सकती है। विदेशी लोगों के लिये भी यह मंदिर आकर्षण का केन्द्र है। प्राय: सैकडों विदेशी पर्यटक वागमती के पूर्वी तट से फोटो लेते देखे जाते हैं। मंदिर के पूर्व की ओर मंदिर की सीढियों के ठीक नीचे पवित्र वागमती नदी बहती हैं। भगवान् पशुपतिनाथ के अभिषेक के लिये इसी पवित्र नदी के पानी का इस्तेमाल होता है।

कुछ लोगों का विश्वास है कि यह मंदिर पहली शताब्दी का है। इतिहासकार इसे तीसरी शताब्दी (ई०पू०) का बताते हैं। मंदिर अति प्राचीन है। समय-समय पर इसमे परम्मत

एवं रख-रखाव होता रहा है ।

सन् १९६२ में इस मंदिर का पूरी तरह जीर्णोद्धार हुआ था । इससे पूर्व राजा प्रताप मल्ल ने इस मंदिर के क्षेत्र में अनेक छोटे-छोटे मंदिर और मूर्तियाँ बनवाई थीं । उससे पूर्व राजा शिव सिंह मल्ल (१५८४-१६४०) की रानी गंगा देवी ने भी इस मंदिर का निर्माण, सुधार और परिष्कार किया । शिव मंदिर के अहाते में, शिवलिंग के पश्चिमी मुख की ओर बने विशाल पीतल का नंदी काडमांडू के तात्कालिक शासक धर्मदेव द्वारा बनवाया माना जाता है जो पशुपति मंदिर के संस्थापकों की २० वीं पीढी का राजा था । आठवीं सदी में यहाँ शंकराचार्य आये थे यह प्रामाणिक बात है । शंकराचार्य ने यहाँ शैव धर्म को सुदृढ बनाने के लिये बौद्ध और शाक्तों से शास्त्रार्थ किया, यहाँ की पूजा-पद्धति सुनिश्चित की । उनके नाम का शंकराचार्य मठ आज भी विद्यमान है । मुख्य द्वार के बाहर दाईं ओर शंकराचार्य का मंदिर बना दिया गया है जिसमें शंकर एवं उनके शिष्यों की सुन्दर प्रभावशाली मूर्तियाँ बनी हैं तथा ब्रह्मा, विष्णु, महेश और गणेश की मूर्तियाँ भी बनी हुई हैं । मंदिर को सुन्दर बनाने में नेपाल के राणा प्रधानमन्त्री चन्द्र शमशेर (१९०१-१९२८) ने भी बहुत योग दिया था । शाहवंश के शासकों ने भी इस मंदिर का पूरा ध्यान रखा था । मंदिर के प्रांगण में (शिवलिंग के दक्षिण मुख की ओर प्रांगण में) राजा महेन्द्र की हाथ जोडे पूजा की मुद्रा में पितल की हैं, यह मूर्ति कला का सुन्दर नमूना है ।

**मंदिर का मुख्य द्वार**

मंदिर का मुख्य द्वार भव्य एवं आकर्षक है । सबसे ऊपर स्वर्ण कलश युक्त तीन शिखाएँ बनी हैं । मुख्य मंदिर की पैगोडा शैली की छतें, अनेक गुंबज, ध्वज, शिखर तथा अनेक मूतियाँ और प्रांगण का विशाल नंदी स्वर्ण सा चमकता प्रतीत होता है । वास्तव में वे पीतल के हैं परन्तु इन पर सोने की पालिश इतनी अच्छी की गई है कि ये सोने जैसे लगते हैं और हर समय चमकते रहते हैं ।

मुख्य द्वार पर बीच में विशाल आकार का ॐ बना हुआ है । इसके बीच भगवान शंकर का पूरा चित्र दीवाल में मिट्टी से उभार कर बनाया गया है । शिव अपने कैलाश में सुसज्जित खडे हैं । इसमें भरे गये रंग बहुत आकर्षक हैं । इसकी बाईं ओर गणेश की प्रभावशाली मूर्ति है जो अपनेवाहन मूसक सहित विराजमान हैं । इसके ऊपर चन्द्रमा बना हुआ है । दूसरी तरफ दाईं ओर शिव के दूसरे पुत्र कुमार की प्रतिमा है । यह मूर्ति भी बहुत सुन्दर है इसके ऊपर सूर्य बना है । मंदिर की दहलीज पार करते ही पौढी में ऊपर की ओर एक और तस्वीर लगी है जिसमें शिव को अपनी जटा में गंगा को समाहित करते दिखाया है । आकाश से गंगा कूदी हैं और शिव की जटा में समा गई हैं, सामने नंदी और भगीरथ ऋषि खडे हैं । यह चित्र भी बडा प्रभावोत्पादक हैं । यहीं सत्री हर वक्त खडा रहता है । इसे पार करते ही सामने आपको विशाल सोने सा चमकता नंदी का पृष्ठ भाग दिखाई देगा । नंदी का पूँछ देखना अशुभ माना जाता है । इस नंदी के आगे पुन: एक छोटा नंदी है । पीतल का बना यह विशाल नंदी नेपाल में पाये जाने वाले नंदियों की प्रतिमाओं में सबसे बडा है ।

इस मंदिर के अहाते में ही दक्षिण भाग की ओर उन्मत्त भैरव के पीछे कीर्ति भैरव और शीतला माता का मंदिर है । मुख्य द्वार की दहलीज पार करते ही विशाल नंदी और पशुपति का प्रमुख मंदिर स्पष्ट सामने आ जाता है । यह मंदिर पैगोडा शैली का है । इसके प्रांगण में नंदी, घंटा, अन्य अनेक छोटे छोटे मंदिर विशाल नंदी के साथ ही वीरासन में भक्ति की मुद्रा में उत्तर मुख की ओर हाथ जोडे बैठे भक्त शिरोमणि हनुमान जी की विशाल मूर्ति है जिसके ऊपर छत्र बना है, चारों तरफ लोहे की जालियाँ लगी है । मूर्ति करीब एक मीटर ऊँची है जिसे करीब एक मीटर ऊँचे चबूतरे पर रखा गया है । मंदिर दो मंजिला है पैगोडा शैली की ढलानदार दो छतें हैं जिन पर सोने की पालिश से युक्त पीतल की चद्दरें मढी हैं । सुन्दर चमकदार स्वर्णिम छतें सोने का भ्रम पैदा करती हैं । यह नेपाली धातु कला का सुन्दर उदाहरण है ।

**मुख्य मंदिर**

मुख्य मंदिर विशाल आंगन के बीच बना है जो आंगन के फर्श से करीब एक मीटर ऊँचे चबूतरे पर निर्मित है । पैगोडा शैली की दुहरी छत के साथ मंदिर के चारों दिशाओं में शिवलिंग के चारों मुख के ठीक सामने चार दरवाजे हैं । मंदिर के अंदर-बाहर की दीवारें चांदी की चद्दरों से मढी हुई हैं । जिन पर शिव के गणों, गंधर्वों, यक्षों की मूर्तियाँ उभारी गई हैं । चबूतरे पर बना मंदिर दुहरे प्रकोष्ठ में है । उत्तर, पूर्व और दक्षिण मुँह के लिंग के दर्शन के लिए भीतरी प्रकोष्ठ में भक्तगण प्रवेश करते हैं जहाँ पहले दरवाजे और मूर्ति के लिंग के बीच में एक और दरवाजा है जो करीब दहलीज से १० सेन्टी मीटर ऊँचा पत्थर तक का बना है । भक्त लोग इस दरवाजे तक ही पहुँच पाते हैं । यहीं से दर्शन करते हैं । पूजा, पुष्प, चढावा यहीं से पुजारियों के हाथ में दे देते हैं जो

दरवाजे से करीब एक मीटर दूर ठीक मध्य में स्थित चतुर्मुखी लिंग पर चढाते हैं। पुष्प प्रसादी कर पुनः भक्तों को दे दिये जाते हैं। पश्चिम के चौथे बीच के द्वार तक दर्शनार्थी नहीं पहुँच सकते हैं। यहाँ पर बीच में रजत मंडित एक छोटा नंदी है तथा यहाँ भंडारी (मंदिर के सेवक) चंदन घिसते रहते है और भक्तों को चंदन, चरणामृत देते हैं। पश्चिमी द्वार से पश्चिम मुख लिंग के दर्शन भक्तों को करीब तीन मीटर दूर से करने होते हैं। बीच में रजत मंडित छोटे नंदी के दायें-बायें दो गंधर्विणी की पीतल की प्रतिमाएँ रखी हुई हैं। प्रसाद या पूजा या पंचामृत स्नान का अभिषेक कराने वाले भक्तों को उत्तर, दक्षिण या पूर्व के द्वार पर जाना होता है।

**पैगोडा शैली के बाह्य भाग की बनावट**

पीतल से बनी पैगोडा शैली की दो छतें सोने सी चमकती हैं। इनको सहारा देने के लिये लगाए गए लकडी के ब्रेकेट्स पर अनेकानेक देवी देवताओं की सुन्दर मूर्तियाँ काष्ठ पर उकेरी गई हैं और इन्हें सुन्दर रंग से सुचित्रित किया गया है। नेपाल के काष्ठ शिल्प और चित्रकला के ये उत्कृष्टतम नमूने हैं। दोनों छतों के चारों कोनों पर सहारे की लकडी की लम्बाई के अनुसार शार्दूल चित्रित हैं। डरावना शेर जैसा मुँह, दो पंजे ऊपर किये, नीचे के दो पंजो पर बैठा हुआ। लकडी पर बारीकी से उकेरे और अच्छे रंग भरे शार्दूल की ये काष्ठ कृतियाँ शिव की शक्ति की प्रतीक हैं।

वायु पुराण के अनुसार शिव के दो रूप हैं सित और असित। सित से अनेक महाविद्याएँ और मात्रिकाओं ने जन्म लिया और असित से योगिनियों ने। उसी भावना का प्रभाव पैदा करने के लिए यहाँ अनेकानेक चित्र काष्ठ पर उकेरे गये हैं और इन पर पक्का रंग किया गया है।

पैगोडा शैली की ऊपर वाली छोटी छत को सहारा देने वाले लकडी के टुकडों के चारों कोनों पर शार्दूल और चारों दिशाओं में चार-चार देवियों के चित्र लकडी पर उकेरे गये हैं। ये चित्र शिव की महाविद्या, योगिनी और मात्रिकाओं के हैं। इनमें से हरेक के पैर के नीचे छिपे दबे एक गोलमटोल बालक का सा चित्र है।

पैगोडा शैली की दूसरी बडी छत को सहारा देने वाले लकडी के शहतीर पर चारों कोनों पर, ठीक ऊपर वाले के नीचे, चार बडे आकार के शार्दूल अंकित हैं। इनका रंग स्वरूप बिलकुल ऊपर जैसा हैं। ये आकार में उपर के शार्दूल से दूगुने हं। कुछ विदेशी लेखकों ने इसे 'नेपाल का दैवी पशु' कहा है। क्योंकि यह शार्दूल नेपाल के अनेक मंदिरों में दिखाई देता है। मंदिर की सुरक्षा के लिए इसे आवश्यक मानते है।

प्रवेश द्वार के ठीक सामने मुख्य मंदिर के पश्चिम मुख की ओर पैगोडा शैली की बडी छत के दोनों शार्दूलों के बीच में हनुमान, राम, सीता, लक्ष्मण, भरत और शत्रुघ्न की छः काष्ठ मूर्तियाँ अंकित हैं। इसी प्रकार दक्षिण मुख की ओर पूरी छत के कोने के दोनों शार्दूलों के बीच में युधिष्ठिर, द्रौपदी, भीम, अर्जुन, नकुल, सहदेव की छः काष्ठ प्रतिमाएँ जडी हैं। यहाँ द्वार के ठीक ऊपर गरुड पर बैठे विष्णु की रजत मंडित प्रतिमा है। गरुड का मुख पुरुष का है। इसी प्रकार मुख्य मंदिर के पूर्वी मुख की ओर बडी छत के दोनों शार्दूलों के बीच में क्रमशः बलराम, गुह्येश्वरी, सरस्वती, गंगा, जमुना और विश्वकर्मा की छ काष्ठ प्रतिमाएँ बनी हैं। इसी प्रकार उत्तर की ओर के भाग में गणेश, ब्रह्मा, शंकर-पार्वती, विष्णु और कुमार की छः काष्ठ प्रतिमाएँ जडी हैं। ये सभी काष्ठ प्रतिमाएँ पौराणिक आधार पर बनाई गई हैं एवं कला की दृष्टि से बहुत ही उत्कृष्ट हैं। इनमें भरे जाने वाले रंग इनके सौन्दर्य को द्विगुणित करते हैं। वायु, पानी से प्रभावित नहीं होने वाले रंगों से इनका सौंदर्य यथावत् बना रहता है। कुछ वर्षों के बाद तो इन प्रतिमाओं को पुनः रंग करना आवश्यक ही है। फिर भी इसकी आवश्यकता पाँच साल से पहले नहीं पडती।

पशुपति मंदिर के बाहर बनी ये काष्ठ प्रतिमाएँ नेपाल की काष्ठ कला और चित्रकला के उत्कृष्ट नमूने हैं। इसी प्रकार पैगोडा शैली की दूसरी बडी छत के साथ उपरोक्त गिनाए गए चौबीस प्रतिमाएँ उत्कीर्ण हैं। हर प्रतिमा के नीचे पुरुष-स्त्री का युगल अंकित हैं। कहीं ये अनुराग मुद्रा में हैं तो कहीं-कहीं ये मिथुन मुद्रा मैं। यही परंपरा भारत में भी अनेक शिव मंदिरों में पाई जाती हैं।

चारों द्वारों के सामने ठीक मध्य में बहुत ऊपर से लगभग पाँच मीटर लम्बी पीतल की सांकल में एक दीपदान लटका हुआ है जिसमें भक्त लोग शिव को दीप जलाते हैं। चारों दरवाजों के साथ-साथ चबूतरे पर द्वार के दोनों ओर दो बैठे हुए शेर पीतल के बने हुए हैं। इसके अलावा संगमरमर के चबूतरे के चारों तरफ पीतल की रेलिंग बनी है। उत्सव त्यौहार के अवसर पर इन दीपों में तेल बत्ती डालकर मंदिर को दीपों से जग-मग किया जाता है।

**श्री पशुपति दर्शन महात्म्य**

स्कन्दपुराण, वराहपुराण, हिमवत्खण्डपुराण, नेपाल-

महात्म्य आदि अनेक प्राचीन धर्मग्रन्थ में श्री पशुपतिनाथ के महात्म्य का वर्णन है । इन धर्म ग्रन्थों मे बागमती स्नान श्री पशुपति लिङ्ग दर्शन तथा परिक्रमा की अलग-अलग महिमा का वर्णन किया गया है ।

हिमवत्खण्डपुराण के अनुसार जो मनुष्य अन्त समय मे बागमती मे पाउ डुबोकर प्राण त्याग करता है, वह पापी होने पर भी योग साधना से प्राप्त होने वाला शिवगति प्राप्त करता है ।

बागमती स्नान से राजसूय और अश्वमेघ यज्ञ के पुण्य सहित स्वर्ग प्राप्ति और आचमन मात्र से स्वर्ग प्राप्त होने का उल्लेख पुराण मे मिलता है ।

पुराण के अनुसार बागमती मे स्नान करके श्री पशुपतिनाथ का दर्शन करने से संसार से निष्पाप होकर शिवलोक प्राप्त होता है ।

भक्तिपूर्वक जो मनुष्य श्री पशुपतिनाथ के पञ्चमुखी लिङ्ग का मात्र दर्शन करते है, वे अज्ञानता से हुए पापों से मुक्त होकर यज्ञ, दान, व्रत तथा उपवास का फल सहित शिवलोक को प्राप्त होते है ।

श्री पशुपति मे जाकर एकवार प्रणाम मात्र करने से पशुयोनि में जन्म नहीं लेना पडता है ।

श्री पशुपतिनाथ लिङ्ग की परिक्रमा मात्र करने से मनुष्य को अत्यन्त सुन्दर और शक्तिशाली शरीर प्राप्त होता है । आधा परिक्रमा मात्र करने से भी इस लोक मे सुख प्राप्त होता है ।

जय गुरुदेव !

# सद्गुरुदेवको नेपाल आगमन

समय, परिस्थिति आफ्नै रफ्तारले अघि बढिरहेको छ । परब्रह्मको सृष्टिभित्र सजिएको जीवनजगतले आफ्नै रुपले सृष्टिलाई अगाडि बढाइरहेको छ । परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको अवतरणसँगै सारा पृथ्वीबासीले सद्गुरुदेव निखिललाई गुरु रुपमा प्राप्त गर्ने सौभाग्य प्राप्त गरेका छन् । सारा देवीदेवता, ऋषिमुनिहरुदेखि लिएर पृथ्वी माता, प्रकृति, वायु, जल, अग्नि, आकाश, सम्पूर्ण तत्त्वमा विराजमान् दैवीशक्तिहरु प्रफुल्लित हुनुहुन्छ। यो ब्रह्माण्ड पनि आफैमा धन्य भयो होला परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरु रुपमा पाउँदा। अधर्म, असत्यता, दावनीय प्रवृत्तिहरुको बोलवाला बढ्दै देवीदेवता एवं सद्गुरु र सत्यतामाथि प्रश्नचिह्न उठाउँदै अगाडि बढेको यस घोर कलिकालको विषम घडीमा, संतप्त पृथ्वी माताको पनि धैर्यको सीमा टुट्न लागेको कठीन घडीमा सद्गुरुदेव निखिललाई आफ्नो काखमा अवतरण गराउन पाउँदा पृथ्वीमाता कति हर्षित र गर्वित हुनुभयो होला भन्ने अनुमान कल्पनाभन्दा धेरै पर छ ।

सद्गुरुदेवको अवतरणसँगै पृथ्वीबासीले सद्गुरु मात्र पाएनन्, लोपप्राय: भइसकेका हाम्रा ऋषिमुनिहरुका थाती मन्त्र, तन्त्र, यन्त्र, आयुर्वेद, सम्मोहनविज्ञान, यज्ञ, ज्योतिष, सूर्यविज्ञान, रत्नविज्ञान आदि विषयहरुको पुनर्उत्थान गरी यी विद्याहरुमा भएका क्लिष्टतालाई हटाई सर्वसुलभ बनाउनु भयो। केही व्यक्तिहरुको वर्चस्व रहेको यी विधाहरुमा सबैको पहुँच पुग्ने भयो, जो कोहीले पनि यसलाई प्राप्त गर्न सक्ने भए। सद्गुरुदेवले प्रामाणिक रुपमा हजारौं साधना शिविरहरु संचालन गरी सबैले प्रत्यक्ष अनुभव गर्न सक्ने भावभूमिको विकास गर्नुभयो । सयौं ग्रन्थको रचना गरी तन्त्र, मन्त्र, योग, ध्यान, सम्मोहन, ज्योतिष आदि क्षेत्रका गूढ रहस्यहरु उजागर गर्दै प्रामाणिक कुराहरु समाज समक्ष ल्याउनुभयो। सद्गुरुदेवको उपस्थितिको यत्रतत्र सबैले अनुभव गर्न थाले। गृहस्थ शिष्यहरुका लागि मात्रै नभई संन्यासी शिष्यहरुलाई समेत गोलबन्द गरी संन्यास जीवनमा भएका अन्धविश्वास, अनावश्यक देखावटीपन, पाखण्डपन, बडप्पन आदिलाई

हटाई संन्यासीहरुको मूल्य, मान्यतालाई सबै समक्ष स्थापित गर्नुभयो र संन्यास जीवनको वास्तविकतालाई उजागर गर्दै यसैमा अगाडि बढ्ने प्रेरणा र हौसलाका साथमा आवश्यक मार्गनिर्देशन प्रदान गर्नुभयो ।

यसरी देश-विदेशमा परमपूज्य सद्गुरुदेवले देखाउनु भएको बाटोमा हिँड्नेहरुको जमात बढ्दै गयो । ठाउँ ठाउँमा संस्थाहरु जन्मदै गए, जताततै आध्यात्मिक भावभूमिको सूत्रपात भयो र आगामी युग आध्यात्मिक युग हुने शंखघोष गरी त्यसका लागि जीवित, जाग्रत शिष्यहरुको निर्माण गर्नुभयो । यस्तै देश-विदेशमा बढेको आध्यात्मिक लहरले नेपाल पनि अछुतो रहेन । परमपूज्य सद्गुरुदेवको संन्यास जीवनमा तपस्थलीको रुपमा रहेको नेपाल उहाँको तप ऊर्जाले जाग्रत भयो, यहाँका भाग्यमानी शिष्यहरुले उहाँको विराट योजनालाई नेपालमा पनि फैलाए । फलस्वरुप वि.सं. २०४७ सालको माघ महिनामा उहाँको नेपाल आगमन हुँदा भव्य एवं दिव्य साधना शिविर सम्पन्न भयो । सयौं व्यक्तिहरुले त्यसबेला अद्वितीय शिव-लक्ष्मी साधना शिविरमा भाग लिने अवसर प्राप्त गरे । सद्गुरुदेवले राष्ट्रिय, अन्तर्राष्ट्रिय रुपमा पुऱ्याउनु भएको योगदान, आध्यात्मिक क्षेत्रका उच्चतम धरोहरको रुपमा स्थापित व्यक्तित्वलाई नेपालको तर्फबाट तत्कालीन प्रधानमन्त्री कृष्णप्रसाद भट्टराईले राष्ट्रिय रुपमा अभिनन्दन गर्नुभएको थियो । यसरी उहाँको योगदानको केही मात्रामा भए पनि कदर भयो । सद्गुरुदेवको नेपाल आगमनसँगै नेपालमा गुरु सेवक सेविका र साधक साधिकाहरु उहाँलाई गुरु रुपमा धारण गर्दै नेपालमा आध्यात्मिक भावभूमि निर्माणमा जुटिरहे । नेपालीहरुले पनि सद्गुरुदेव निखिललाई यसरी गुरु रुपमा प्राप्त गर्ने सौभाग्य प्राप्त गरे, उहाँको नाम जन जनमा पुऱ्याउने गुरुकार्यमा तल्लीन हुने अवसर प्राप्त गरे । यसरी नेपालमा पनि सद्गुरुदेवलाई गुरु मानेर अगाडि बढ्नेहरुको जमात दिन प्रतिदिन बढ्दै गयो । विभिन्न संस्थाहरुको जन्म हुँदै गयो । साधक साधिकाहरुले आ-आफ्नै रुपबाट गुरुकार्य गर्दै गुरु योजनालाई साथ दिँदै गए । यसै क्रममा गुरु चिन्तन विस्तार गर्ने महान् उद्देश्यका साथ सिद्धाश्रम शक्ति केन्द्र नेपालको जन्म हुन पुग्यो ।

जय गुरुदेव !

## गुरु त ज्ञानको अविरल गंगा...

गुरु त ज्ञानको अविरल गंगा
गहिराइ कति छ ठेगाना छैन ।
बगेर सबको पाप पखाल्ने
बदलामा उनलाई केही चाहिन्न ॥

मानव जीवनको पवित्र बन्धन
खोजेर अन्त कहीँ पाइन्न ।
गुरुको जस्तै निःस्वार्थ माया
संसारमा अन्त कहीँ पाइन्न ॥

यो रक्त कण कण चल्दछन् हाम्रो
लिएर नाम गोरख निखिलको ।
यो प्राण हाम्रो नासो गुरुको
ढुकढुकी भित्रको श्वास गुरुको ॥

चाहना छैन मोक्षको अब
चरणको धूलो बनी रमाऊँ ।
चाहन्नौँ अरु केही पनि गुरुवर
सेवक बनेर सधैँ रमाऊँ ॥

कहिले चुकाउने यो ऋण तिम्रो
यो एउटा जुनी कमै हुन्छ नि ।
हजारौँ जुनी जन्माइदेऊ गुरुवर
खटेर तिम्रो सेवा गर्छौं नि ॥

– सुमित्रा सिलवाल
गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम

## क्षमायाचना

***परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूबारे अनुसन्धान गर्ने क्रममा उहाँको जन्ममिति सन् १९३५ अप्रिल २१ भन्ने प्रमाण प्राप्त भएको र परमपूज्य सद्गुरुदेवको पारिवारिक स्रोतबाट पनि यो कुरा पुष्टि भएको हुनाले यसैलाई आधिकारिक मान्नु हुन हार्दिक अनुरोध गर्दछौं, साथै लामो समयदेखि परमपूज्य सद्गुरुदेवको जन्ममिति १९३३ भनी विभिन्न ठाउँमा उल्लेख भएर पुग्न गएको असुविधाप्रति सद्गुरुदेव तथा सबैसँग क्षमायाचना गर्दछौं ।***

**सिद्धाश्रम शक्ति केन्द्र**

# जोधपुर यात्रा र नेपाल शिविर

सद्‌गुरुदेवको छत्रछायाँभित्र अगाडि बढिरहेका साधक, साधिकाहरु उहाँकै कृपा, आशीर्वादले कहिले फुक्छन् त कहिले खुम्चिन्छन् । गुरुलीलाभित्र समेटिएका सम्पूर्ण मानवहरु चाहेर नचाहेर विभिन्न परिस्थितिहरुबाट गुज्रन बाध्य हुन्छन् । सच्चा शिष्य बन्नु आफैमा कठीन मात्र नभएर दुष्कर नै हुँदोरहेछ । हुन त शिष्यको परीक्षामा खरो उत्रेर सारा विश्व ब्रह्माण्डलाई उदाहरण दिनु हुने दादा गुरुदेव स्वामी सच्चिदानन्द महाराजका अति नै प्रिय शिष्यको रूपमा आफ्नै अद्वितीय पहिचान बनाउँदै शिष्यहरुको श्रृंखलामा नयाँ इतिहास रच्न सफल अवर्णनीय, अगोचर, अद्वितीय व्यक्तित्वका धनी परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको छत्रछायाँ पाउनु हामी सबैका लागि गर्वको विषय हो । तैपनि यस्ता दिव्यतम् महायोगीलाई गुरु रूपमा पाएर पनि हामीले आफ्नो सौभाग्यलाई बिर्सन्छौं, उहाँलाई सामान्य रूपमा आंकलन गर्ने धृष्टता गर्छौं, जसबाट शिष्य बन्नबाट टाढिन्छौं ।

यतिबेला नेपाललगायत भारतका शिष्यहरुबीच विभिन्न चर्चा चल्न थालेका छन् । परिस्थितिले एकाएक नयाँ मोडहरु लिएका छन् जसको कारण शिष्यहरुमा पनि विभिन्न आरोह-अवरोहको स्थिति देखा परेको छ । हामीले देखेका, जाने-बुझेसम्मका उपल्लो स्तरका साधकहरुमा, गुरुहरुमा ठूलठूला हलचल आएछन् । गुरु परीक्षाले त सानो, ठूलो पनि भन्दो रहेनछ, सोच्दै नसोचेको स्थिति जस्तो नेपालमा थियो, भारतमा पनि त्यस्तै भएछ । गुरुदेवले आफ्नै छोराहरुलाई पनि आफ्नो परीक्षामा हो वा गुरु लीलाभित्रको प्रपञ्चमा पार्नु हुँदोरहेछ । मातालाई नेतृत्व प्रदान गर्ने, साधना, दीक्षा, शक्तिपात गराएर गुरु योजनालाई अगाडि बढाउने आफ्ना प्रतिनिधि शिष्यहरुलाई पनि छोड्नु हुँदो रहेनछ । कसले बुझ्ने यति माथिको गुरु लीला ? कसले बुझ्ने यस्तो विषम परिवर्तनको क्षण ? 'गुरु तत्त्व अत्तो न पत्तो' भने झैं गुरुधाममा आएको परिवर्तन सम्पूर्ण शिष्य, साधक-साधिकाहरुको लागि कौतुहलको विषय बन्यो, रहस्यमय जिज्ञासाको रूपमा रह्‍यो । रहस्यमय विषम परिस्थितिले हामी माझ पनि थप कौतुहलता बढायो । गुरुदेवको तपस्याले सिर्जिएको र गुरुदेवले आफ्नो समस्त मेहनत, परिश्रम, खटाइ, कठिनाई र समस्याका बावजूद शुरु गर्नुभएको कलिकालको गीताको रूपमा प्रकाशित भइरहेको 'मंत्र-तंत्र-यन्त्र विज्ञान'को प्रकाशन एकाएक बन्द भएको खबरले सबैतिर सन्नाटा छायो । हामीलाई मात्र होइन, सारा शिष्य, भक्तहरुलाई खल्लो महसुस भयो । वास्तविकता, सत्यता के हो भन्ने हाम्रो वशको विषय भएन । हामी त सांसारीकतामा हराइरहेका मनुष्य, हामीमा त सतही रूपमा मूल्यांकन गर्ने नराम्रो बानी बसेको छ । त्यसैले थोरै सोच्छौं, छोटो बुद्धिले आंकलन गर्न खोज्छौं, शरीर भावलाई बाहिर ल्याउँछौं ।

गुरुधाममा आएको परिवर्तन एवं रहस्यमय घटनाले हामीलाई पनि गुरुधामसम्मको यात्रामा जान मन गरायो, पूजनीय गुरुमातालाई भेट्ने, उहाँको दर्शन गर्ने उत्कट भावना जाग्रत भयो । उमेरले पचहत्तर वर्ष नाघिसक्नु भएकी गुरुमाताले यी क्षणहरुलाई कसरी नियालिरहनु भएको छ, आफ्नै परिवारभित्रको घटनालाई कसरी सुल्झाइरहनु भएको छ, कसरी विषम परिस्थितिमा उत्पन्न घटनाक्रमलाई न्यून गरी नेतृत्व प्रदान गरिरहनु भएको छ, त्यो आफैमा अकल्पनीय नै छ ।

सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट यतिबेला के सहयोग गर्न सकिएला, यस्तो क्षणमा हाम्रो दायित्व के होला भन्ने भावनाहरु, चाहना, इच्छाहरुलाई साथमा लिएर गत दशैंपछिको कोजाग्रत पूर्णिमाको बेलुकी भारतको जोधपुरका लागि प्रस्थान गर्‍यौं । जोधपुरको दूरी नेपालबाट केही टाढा नै भएकोले सजिलो र छिटो यात्राका लागि लखनउ भएर जाने निधो गरेका थियौं । भारतको पुरानो एवं प्रसिद्ध शहर वनारसबाट पनि सिधै जोधपुर जान सकिने रहेछ । लखनउबाट रातको ट्रेनमा बसेर जोधपुरको लागि प्रस्थान गर्‍यौं । करिव १७–१८ घण्टा ट्रेनको यात्रापछि बेलुकी ५/६ बजेतिर जोधपुर पुग्यौं । अटोमा भा.रु. ४०।- तिरेर गुरुधाम पुग्यौं । बेलुकी भयो । गुरुधाममा कार्यरत गुरु सेवकहरु आ-आफ्नै कार्यमा व्यस्त थिए । अभिवादनस्वरूप 'जय गुरुदेव !' गरियो । माथि आरती कक्षमा (साधना

**नेपालीहरुलाई त्यहाँ सबैले माया गर्ने र माताले पनि माया गर्नुहुने भएकोले प्रायः सबै नेपालीहरुले उहाँको सहजै दर्शन पाउँदा रहेछन् ।**

हलमा) दर्शन र झोला राख्ने सल्लाह पाइयो । 'पूजनीय गुरुमाता कता हुनुहुन्छ, भेट्न मिल्छ अहिले' भनेर हामीले आफ्ना तड्पाईलाई प्रश्नको रूपमा राख्यौं । संयोगवश पूजनीय गुरुमाता र अरविन्द गुरुदेव दिल्लीमा हुनुहुँदो रहेछ, भोलि मात्रै फर्किने थाहा भयो । बेलुकी भएकोले गुम्टागुम्टी बोकेर गुरुभाइ-बहिनीहरुसँगै गएर खाना खाई नजिकैको होटेलमा बास बस्यौं । भोलिपल्ट दिउँसो माता फर्किने र उहाँलाई भेट्न पाउने मीठो सपनालाई साथमा लिएर सुत्न गयौं । दिउँसो करिव २:०० बजेतिर माताजी आउनु हुने निधो भएपछि उहाँको स्वागतमा त्यहाँ सेवारत गुरु सेवकहरु फूल लिएर लाइनमा बसे, हामी पनि फूल लिएर त्यहीं लाइनमा बस्यौं । माताको आगमनपछि फूल चढाई पादुका दर्शन गऱ्यौं । अरविन्द गुरुदेव पनि साथमा हुनुहुन्थ्यो, उहाँको पनि दर्शन गऱ्यौं । हामी सिद्धाश्रम शक्ति केन्द्र नेपालबाट आएको खबर उहाँले थाहा पाइसक्नु भएको रहेछ । उहाँबाट दर्शनपछि अफिसमा भेट्ने आदेश पाएपछि उहाँलाई भेट्न हामी पाँचजना अरविन्द गुरुदेवलाई भेट्न अफिसभित्र गयौं ।

वर्षौंदेखिको हाम्रो चाहना थियो गुरुमातालाई सम्मान गर्ने, उहाँको नेतृत्वमा साधना शिविर संचालन गर्ने । नेपालमा वि.सं. २०५७ साल फागुन महिनामा शिवरात्रिको अवसर पारेर भव्य शिविर आयोजना भएको हुनाले उक्त शिविरमा आयोजककै रूपमा भाग लिन हामी पनि अघि सऱ्यौं । शिविरमा भाग लियौं, माताजीसँग भेट्ने, उहाँ समक्ष आफ्ना कुराहरु राख्ने, उहाँको सेवा गर्ने शुभ अवसर पनि प्राप्त भयो । भगवान् श्री पशुपतिनाथ दर्शनका लागि माताजी जानु हुँदा पनि उहाँको सेवा गर्ने अवसर, पूजामा सहयोग गर्ने अवसर प्राप्त भएको थियो । नेपाल आगमनको पहिलो क्षणमा स्वागत गर्ने र शिविर सकेर जाने क्रममा विमानस्थलको भिआइपी कक्षमा विदाइ गर्ने अवसर पनि प्राप्त भएको थियो । त्यस शिविरले सिद्धाश्रम शक्ति केन्द्रलाई राष्ट्रिय एवं अन्तर्राष्ट्रिय रूपमा चिनाउन ठूलो टेवा पुऱ्याएको थियो अर्थात् संस्थापनको साढे एक वर्षमा नै यस केन्द्र छुट्टै पहिचान बनाउन सफल भएको थियो । सद्गुरुदेवलाई उहाँको समयमा हामीले अभिनन्दन गर्न नपाएकाले माताजीको सम्पूर्ण शिष्यहरुको तर्फबाट राष्ट्रियरुपमा अभिनन्दन गर्ने तथा उहाँको सान्निध्यमा अन्तर्राष्ट्रिय साधना शिविर सम्पन्न गर्ने भाव हामीमा आउनु स्वभाविकै थियो । हामीमा जोधपुर गुरुधामप्रति असीम श्रद्धा, विश्वास, भावना हुँदाहुँदै पनि विविध कारणबस बाहिरी रूपमा त्यहाँ बारम्बार जाने वातावरण बन्न सकेको थिएन । आश्रमका कार्यक्रमहरुमा व्यस्त रहनु पर्ने र सद्गुरुदेवहरुको आदेश-निर्देशनहरुलाई आत्मसात् गर्दै गुरु योजनालाई द्रुतगतिले अगाडि लैजाने प्रवाहमा नै दत्तचित्त भई अगाडि बढिरहेका थियौं । त्यसपछिका दिनहरुमा पनि अर्थात् करिव साढे एक वर्ष अगाडि पूजनीय गुरुमाताको नेपाल आगमन हुँदा ताका पनि विविध कारणबाट संस्थागत रूपमा भाग नलिए पनि व्यक्तिगत रूपमा भाग लिन जानेहरुका लागि भने अवसर दिइएको थियो । त्यसबेला माताको स्वास्थ्यमा केही प्रतिकूलता देखिएपछि उहाँलाई नर्भिक अस्पतालमा भर्ना गर्नु परेको थियो । त्यतिबेला पनि आश्रमको तर्फबाट केही व्यक्तिहरु अस्पताल गएर माताजीको सेवा गर्ने अवसर पाइएला कि भनी प्रयास गरिएको थियो ।

विगतलाई छिचोल्दै हामी अगाडि बढ्ने क्रममा

**परिस्थितिले एकाएक नयाँ मोडहरु लिएका छन् जसको कारण शिष्यहरुमा पनि विभिन्न आरोह-अवरोहको स्थिति देखा परेको छ । हामीले देखेका, जाने-बुझेसम्मका उपल्लो स्तरका साधकहरुमा, गुरुहरुमा ठूलठूला हलचल आएछन् । गुरु परीक्षाले त सानो, ठूलो पनि भन्दो रहेनछ, सोच्दै नसोचेको स्थिति जस्तो नेपालमा थियो, भारतमा पनि त्यस्तै भएछ । गुरुदेवले आफ्नै छोराहरुलाई पनि आफ्नो परीक्षामा हो वा गुरु लीलाभित्रको प्रपञ्चमा पार्नु हुँदोरहेछ । मातालाई नेतृत्व प्रदान गर्ने, साधना, दीक्षा, शक्तिपात गराएर गुरु योजनालाई अगाडि बढाउने आफ्ना प्रतिनिधि शिष्यहरुलाई पनि छोड्नु हुँदो रहेनछ ।**

यतिबेला जोधपुर आइपुगेका थियौँ । हाम्रो चाहनालाई प्रस्फुटन गराउने, बिसाउने अवसर पनि प्राप्त गरेका थियौँ । यही मौकाको फाइदा उठाउँदै भनौँ वा वर्षौंपछिको गुरु परीक्षा पार गरेका कारण अनुकूल परिस्थिति भनौँ, अरविन्द गुरुदेवसँग भेट्ने बित्तिकै हामीले आफ्ना इच्छाहरु निवेदन गर्‍यौँ । परमपूज्य सद्‌गुरुदेवको नेपाल आगमन हुँदा हामीले त्यस्तो अवसर प्राप्त गरेनौँ, उहाँको अभिनन्दन कार्यक्रममा भाग लिने सौभाग्य प्राप्त गरेनौँ । त्यसैले पूजनीय गुरुमातालाई नेपालमा राष्ट्रिय स्तरबाट अभिनन्दन गर्ने साथसाथै शिविर पनि सम्पन्न गर्न चाहन्छौँ भनेर हामीले आफ्ना भनाइ अघि बढाउन पाउँदा नपाउँदै उहाँ खुशी भएर 'ठीक छ, तयारी गर्नू । केही पर्‍यो भने मेरो मोबाइलमा सम्पर्क गर्नू' भनेर आफ्नो मोबाइल नं. लेखेर दिनुभयो र आवश्यक तयारी गर्ने आदेश दिनुभयो । उहाँले यस बारेमा माताजीसँग भेटेर सबै कुरा राख्न भन्नुभयो । हामी अत्यन्तै खुशी एवं हर्षित हुँदै त्यहाँबाट बाहिर निस्की मातालाई भेट्न गयौँ । माता आराम गर्दै रहनु भएकोले उहाँका सेवकहरुबाट साढे पाँच बजेतिर आउने सल्लाह पायौँ । हामी केही बेर चियापानका लागि बाहिर निस्क्यौँ । अरविन्द गुरुदेवबाट पाएको आश्वासन, आत्मीयता, अभिनन्दन समारोहमा माताजी सहित नेपाल आउने उहाँको कुराले हामी हर्षित भयौँ र कतिबेला माताजीलाई भेटेर उहाँबाट आदेश लिने भन्ने तड्पाई बढ्न गयो । त्यसपछि मातालाई भेट्न उहाँको निवासमा आयौँ । नेपालीहरुलाई त्यहाँ सबैले माया गर्ने र माताले पनि माया गर्नुहुने भएकोले प्रायः सबै नेपालीहरुले उहाँको सहजै दर्शन पाउँदा रहेछन् । साढे पाँच बजेतिर माताको कोठा बाहिरकोखालि ठाउँ, जहाँ उहाँ कुर्सीमा बसेर दर्शन दिने गर्नुहुन्छ, मा गएर हामी बस्यौँ । माताको आगमनपछि उठेर आदर प्रकट गर्‍यौँ, चरण पादुकामा दर्शन गर्‍यौँ । नेपालबाट लिएर गएका उपहारहरु केही लगाई दियौँ, अन्य उहाँको चरणमा राख्यौँ । माताजीले अत्यन्तै हर्षित मुद्रामा आशीर्वाद दिँदै 'कहिले आयौ, तिमीहरुलाई आउन साह्रै टाढा छ' भनी नेपालीहरूप्रतिको आत्मीयता प्रकट गर्नुभयो । हामीले परमपूज्य सद्‌गुरुदेवले शुभारम्भ गर्नुभएको पत्रिका मंत्र-तंत्र-यन्त्र विज्ञान बन्द हुनाको कारणलगायतका प्रश्नहरु उहाँसँग राख्यौँ । माताले स्पष्टताका साथ बताउनु

---

**माताजीले अगाडि हामीलाई बताउनु भएको थियो, 'अब चिन्ता लिनु पर्दैन, तिमीहरुको गुरुदेवको आदेशअनुरूप नै 'नारायण मन्त्र साधना विज्ञान' करिव एक महिनाभित्रमा नै दर्ता गरी निकालिसकेका छौँ । अब यो पत्रिका पहिले जस्तै प्रत्येक महिना आउनेछ, नाम मात्रै फरक हो, अरु सबै एउटै हो ।'**

भएको थियो कि परमपूज्य सद्‌गुरुदेवले कति संघर्ष गरेर दिनरात नभनी शुरु गर्नुभएको पत्रिका एकाएक उहाँलाई समेत थाहा नदिई बन्द गराउने निवेदन अदालतमा पेश भएको रहेछ ।

माताजीले अगाडि हामीलाई बताउनु भएको थियो, 'अब चिन्ता लिनु पर्दैन, तिमीहरुको गुरुदेवको आदेशअनुरूप नै 'नारायण मन्त्र साधना विज्ञान' करिव एक महिनाभित्रमा नै दर्ता गरी निकालिसकेका छौँ । अब यो पत्रिका पहिले जस्तै प्रत्येक महिना आउनेछ, नाम मात्रै फरक हो, अरु सबै एउटै हो ।' हामीले पनि बिन्ती बिसायौँ, 'माता ! गुरुदेवको पालामा हामीले मौका पाएनौँ, हजूरलाई नेपालमा राष्ट्रिय रुपमा सम्मान गर्ने, अभिनन्दन गर्ने कार्यक्रमको तयारी गर्दैछौँ, हजूरको आदेश, आशीर्वाद प्राप्त भए हुने थियो ।' माता पनि अति खुशी हुँदै 'ठीक छ, तयारी गर, म आउँछु' भन्नुभयो । उहाँले सन् १९९१ (वि.सं.२०४७) तिर नेपाल आउँदाको प्रसंग पनि निकाल्नु भयो । पूजनीय गुरुमाताको नेपाल आगमन हुने र उहाँको राष्ट्रिय सम्मान गर्ने सौभाग्य सिद्धाश्रम शक्ति केन्द्रलाई प्राप्त हुनु आफैमा ठूलो गुरुकृपा भएको महसुस भयो । हामीले मातासँग परमपूज्य सद्‌गुरुदेवको बारेमा एउटा ग्रन्थ र गुरुदेवको बारेमा डकुमेन्ट्री बनाउने प्रस्ताव पनि राख्यौँ । माताजीले खुशी भएर स्वीकृति दिनुभयो । वर्षौं पहिलेदेखि डकुमेन्ट्री बनाउने हाम्रो चाहना माताजीको कृपाले पूरा हुने संकेत देखा पऱ्यो । यसरी माताको ममतामयी कृपा, आशीर्वाद प्राप्त भएकोमा हामी खुशीले गद्‌गद् हुँदै माताजीसँगै बसेर फोटो खिच्यौँ । माताले बोल्नु भएका कुरा क्यामेरामा कैद गरी सबै शिष्यहरुलाई सुनाउने, देखाउने र यो खुशियाली सबैलाई बाँड्ने मनस्थिति बनाउँदै मातासँग विदा भई बाहिर आयौँ ।

यसरी परमपूज्य सद्‌गुरुदेवहरु श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप पूजनीय गुरुमाताको अभिनन्दन हुने निश्चित भयो । सद्‌गुरुदेवको डकुमेन्ट्री बनाउने हाम्रो अभियानमा तीनै जना गुरु पुत्रहरुले गर्नुभएको सहयोग सराहनीय छ । यसका लागि हामी सबै उहाँहरूप्रति कृतज्ञ छौँ । त्यो यात्रामा पलपल सूक्ष्मताबाट परमपूज्य सद्‌गुरुदेवहरुको प्रत्यक्ष कृपा, अनुकम्पाको अनुभूति भयो, उहाँहरुकै कृपाले सम्पूर्ण वातावरण राम्रो भएको हो । यसरी सद्‌गुरुदेवहरुको असीम कृपास्वरूप सिद्धाश्रम शक्ति केन्द्रले अन्तर्राष्ट्रिय स्तरको कार्यक्रम सम्पन्न गर्ने सौभाग्य पायो, सिद्धाश्रम शक्ति केन्द्रले इतिहासमा नै अद्वितीय कार्य गर्ने सौभाग्य प्राप्त गऱ्यो । पूजनीय गुरुमाताबाट गुरुमन्त्र प्राप्त गरेर आजसम्मका शिविरहरुमा भन्दा बेग्लै इतिहास रच्ने संकल्प पनि सूक्ष्म सत्तामा विराजमान सद्‌गुरुदेवहरुको कृपा, आशीर्वादस्वरूप धेरै आरोह, अवरोह, गुरु परीक्षाहरुलाई पार गर्दै अन्ततः पूरा भयो ।

यसरी वर्षौंदेखि सिद्धाश्रम शक्ति केन्द्रमाथि हेर्ने दृष्टिकोणमा एकाएक गुरुकृपा भयो । सिद्धाश्रम शक्ति केन्द्रलाई 'शक्ति केन्द्र' मात्र भनिँदो रहेछ । विभिन्न शिविरहरुमा नेपालबाट सहभागी हुन जानेहरुमार्फत शक्ति केन्द्रको विषयमा गुरुधाममा चर्चा हुने रहेछ, कतिपय कुराहरु यहाँबाट त्यहाँ पुग्दा अर्कै हुनु स्वभाबिकै हो । शक्ति केन्द्रको नाम शास्त्रीजी, तीनजना गुरुदेवहरुलाई कण्ठस्थ रहेछ, जुन कुरा उहाँहरु सबैसँगको भेटमा थाहा भयो, आश्रमप्रति उहाँहरुको दृष्टिकोण राम्रो नै रहेछ । सद्‌गुरुदेवको डकुमेन्ट्री बनाउने हाम्रो अभियानमा उहाँहरुले गर्नुभएको सहयोग सराहनीय नै रह्यो । डकुमेन्ट्रीको कुरामा होस् अथवा गुरुदेवको सम्बन्धमा पुस्तक लेख्ने कुरामा, माताजीले हामीलाई असोचनीयरुपमा सहयोग गर्नुभयो । आफ्नो कम बोल्ने स्वभाव हुँदाहुँदै पनि यससम्बन्धमा पनि उहाँले हाम्रा प्रत्येक जिज्ञासाहरुको उत्तर दिनुभयो र यो कार्यमा हामीलाई प्रेरणा प्रदान गर्नुभयो, जुनकुरालाई हामीले अमूल्य सम्पत्ति मान्यौं । उहाँहरुप्रति कृतज्ञ भयौँ । यसरी कता कता हामीलाई पनि संकोच थियो कि शक्ति केन्द्रप्रति उहाँहरुको दृष्टिकोण कस्तो होला, अप्ठ्यारो स्थिति पो सिर्जना हुन्छ कि जस्तो लागेको थियो । यी शंका, उपशंकाहरु सबै एक एक गरी हट्‌दै गए, हामीलाई पनि आनन्दको अनुभूति हुँदै गयो । बिस्तारै हाम्रा संकोच, अप्ठ्यारो खुल्दै आयो र हामीलाई अगाडि बढ्ने सजिलो वातावरणको सिर्जना भयो । सूक्ष्मताबाट परमपूज्य सद्‌गुरुदेवहरुको प्रत्यक्ष कृपा, अनुकम्पाको महसुस हुँदै

आयो, उहाँहरुकै कृपाले सम्पूर्ण वातावरण हाम्रो पक्षमा मिल्दै आइरहेको थियो । यसरी सद्गुरुदेवहरुको असीम कृपास्वरुप सिद्धाश्रम शक्ति केन्द्रले विजय हासिल गरेको महसुस भयो, त्यसै अनुसारको तयारीमा जुट्न थाल्यौं ।

मातालाई भेटेपछि उहाँले आफैले गुरुमन्त्र दिने वचन दिनुभयो । यसरी सोच्नै नसक्ने विषय पनि गुरुकृपाले सफल हुँदा हाम्रो गर्वको सीमा रहेन । हुन पनि आजसम्मको इतिहासमा नभएको घटना थियो यो । यसरी गुरुमाताले नै स्वयं गुरुमन्त्र प्रदान गर्ने यस दिव्य अवसर नेपाली साधक साधिका मात्र नभई भारतका साधक साधिकाहरुका लागि पनि स्वर्णिम अवसर बन्यो । पूजनीय गुरुमाताको कृपा, आशीर्वाद, ममतामयी आत्मीयताले हामी सबै धन्य भयौं । यति मात्रै होइन, ऐतिहासिक दस्तावेज माताजीका जीवनका गूढ रहस्यहरु, गुरुदेवसँगका प्रसंगहरु बताउनु भएर ती कुराहरुलाई इतिहासमा सुरक्षित गर्ने अवसर पनि प्रदान गर्नुभयो, परमपूज्य सद्गुरुदेवको जीवनमा आधारित घटनाहरुको डकुमेन्ट्री बनाउने कामका लागि चाहिने बहुमूल्य चीजहरु पनि प्रदान गर्नुभयो । यसरी

**पूजनीय गुरुमाताको नेपाल आगमनसँगै साथै माताले नै गुरुमन्त्र दिने खुशीयालीको खबरले नेपालका सबै साधक, साधिकामा उत्साहको लहर ल्यायो । आश्रमका कार्यकर्ताहरुमा जोश, जाँगर भरिएर गुरुकार्यमा खट्ने हौसला थपियो ।**

माताले सम्पूर्ण रूपबाट कृपा गरेका क्षणहरु हाम्रो जीवनका सम्पत्ति बने । उहाँको अनुग्रह यतिसम्म भयो कि सद्गुरुदेवको बारेमा गृहस्थ रूपमा छँदाखेरिका विभिन्न कुराहरु सुन्ने, बस्ने, खाने स्थानहरु, गुप्त साधना कक्ष आदिको बारेमा जानकारीका साथमा दर्शन गर्ने सौभाग्य पनि प्राप्त भयो । साथै माताले देखाउनु भएको ममतामयी स्वरूपभित्र हामी यसरी हरायौं कि जगतमाताको काखमा हराए जस्ता भयौं । कुनै बाधा, छेकबार, कुनै बन्धन बिनाको सम्बन्ध जस्तो, मातृत्वको रसास्वादन गर्दै मातालाई डकुमेन्ट्रीको लागि भनी सानो भजन गाइदिन आग्रह गऱ्यौं । माता पनि हर्षित मुद्रामा 'अहिले अलि संचो छैन' भन्दै हाम्रो आग्रहलाई स्वीकार गरी भजन सुनाउनु भएर हामीलाई पवित्र बनाइदिनु भयो, दिव्य कृपा

वर्षाइदिनु भयो । यसरी जोधपुर बसाइ हाम्रो लागि वरदान सावित भयो । सद्गुरुदेवको बारेमा हालसम्म खासै खोज, अनुसन्धान नभएको अवस्थामा गुरुकृपाले हामीले सोधखोज, अनुसन्धान गर्ने अवसर प्राप्त गरेका थियौं । त्यसैअनुरूप हाम्रो टोलीले सद्गुरुदेवको जन्मस्थल खरंटिया, बाल्यकाल बितेको लोर्डिया, स्कुलको जीवन, कर्मथलो बनेको लुनी आदि क्षेत्रको भ्रमण गऱ्यौं । यसरी नेपालमा संचालन हुने शिविरलाई ऐतिहासिक र अद्वितीय शिविर बनाउने लक्ष्य एवं गुरुदेवको ऐतिहासिक जीवनीसम्बन्धी डकुमेन्ट्री बनाउने तयारीका साथ जोधपुरको यात्रा सकी नेपाल फर्क्यौं ।

पूजनीय गुरुमाताको नेपाल आगमनसँगै साथै माताले नै गुरुमन्त्र दिने खुशीयालीको खबरले नेपालका सबै साधक, साधिकामा उत्साहको लहर ल्यायो । आश्रमका कार्यकर्ताहरुमा जोश, जाँगर भरिएर गुरुकार्यमा खट्ने हौसला थपियो । यत्रतत्र एकाएक सबैमा संजीवनी शक्ति भरिए जस्तो अनुभव भयो । गुरु परीक्षाले थकित जस्ता कार्यकर्ताहरु एकाएक जीवित, जाग्रत शिष्यको रूपमा सल्बलाउन थाले । जताततै जोश, जाँगर, स्फूर्ति बढेको पाइयो । गुरु गोरखकृपा, गुरु निखिलकृपा सबैतिर बर्षिएको अनुभव हुन थाल्यो । यसरी हामी शिविरको तयारीमा जुट्यौं । विभिन्न वैठक, छलफलमा केन्द्रीत हुँदै कार्यक्रम सफल बनाउने क्रममा जुट्यौं ।

हामीले नेपाल फर्केपछि फोनमा अरविन्द गुरुदेवसित सम्पर्क गऱ्यौं, उहाँले पनि माताले नै गुरुमन्त्र दिने घोषणा गर्नुभयो । यसरी उहाँको आदेशले हामी सबैमा खुशीको सीमा रहेन । माताको आगमन त दुर्लभ भएको बेला माताबाटै गुरुमन्त्र प्राप्त हुने सुनिश्चितता, अरविन्द गुरुदेवको आश्वस्तताका शब्दले हामीमा झनै खुशी छायो र गर्वको अनुभूति भयो । यसरी शिविरको लागि खट्न झनै बल मिल्यो ।

पूजनीय गुरुमाताको नेपाल आगमन, अभिनन्दन एवं साधना शिविरबारे अन्य संघ, संस्थाहरुलाई पनि जानकारी दिइयो । धेरैमा खुशीयाली छायो भने कतिमा आश्चर्य पनि भएछ । यसबाट धेरैको आश्रमप्रति हेर्ने दृष्टिकोणमा परिवर्तन आयो र आश्रम सबैलाई सत्यताको परिचायक बन्न पुग्यो । पूजनीय गुरुमाताको असीम कृपा, आशीर्वादका साथ प्राप्त आदेश, निर्देशनले माताले दिनुभएका गूढ कुराहरु, शिविरको अनुमति आदिले सद्गुरुप्रतिको असीम श्रद्धा, भक्तिका कारण शिष्यधर्मलाई पालना गर्दै गुरु योजनामा अगाडि बढिरहेको आश्रमको सही मूल्यांकन भएको महसुस भयो ।

यसरी यो शिविरको ऐतिहासिक महत्त्व त सधैँभरि रहन्छ नै, यस अद्वितीय साधना शिविर आफैमा विभिन्न दृष्टिकोणले महत्त्वपूर्ण रहनेछ, सारा शिष्यहरुका लागि पूजनीय गुरुमाताको अभिनन्दन समारोह गर्वको विषय हुनेछ । जय गुरुदेव !

## कविता

**हे माता ! तिमीले अद्वितीय र अलौकिक कार्य गऱ्यौ**
**यस धर्तीमा सिद्धाश्रमको निर्माणलाई सहयोग गऱ्यौ ।**
**हे माता ! तिमीले माया ममता र दयाको लाज राखी**
**सारा दिन हाम्रै चिन्ता र हेरचाह गऱ्यौ ।**
**हे माता ! तिमीले आफूलाई झुकाई**
**हामीलाई जीवन जिउने कला सिकायौ ।**
**हे माता ! तिमीले ठूलो त्याग र तपस्या गरी**
**यस ब्रह्माण्डमा निखिल तत्त्व गुन्जायौ ।**
**हे माता ! तिमीले प्रत्येक पल आफूलाई जलाई**
**यस संसारलाई सूर्य र चन्द्रमा झैँ उज्यालो दियौ ।**
**हे माता ! तिमीले प्रत्येक पल विषपान गरी**
**हामीलाई अमृत बाड्यौँ ।**
**हे माता ! तिमीले नेपालभूमिलाई स्पर्श गरी**
**हामीलाई ज्ञान, ध्यान, साधना, दीक्षा दियौ ।**

अनिल थापा, सिरुटार, भक्तपुर

# दीक्षाको महत्त्व

साधनाको क्षेत्रमा पदार्पण गर्ने, साधनाको बारेमा जिज्ञासा राख्ने र साधनाको बारेमा जानकारी राख्नेले अत्यन्त महत्त्व र श्रद्धाका साथ उच्चारण गर्ने शब्द हो 'दीक्षा'। दीक्षाको सम्बन्ध गुरु र शिष्यसँग अभिन्न रुपले जोडिएको हुन्छ। यसकारण साधना भन्ने बित्तिकै हामीले तीनवटा शब्द सँगसँगै उच्चारण भएको पाउँछौं। ती शब्द हुन् गुरु दीक्षा र शिष्य। गुरु र शिष्य शब्दको बारेमा हामी धेरै चर्चा परिचर्चा सुनेका छौं, तर दीक्षाको बारेमा हामी कम परिचित छौं। त्यसकारण हाम्रो व्यवहार, आगम, निगममा दीक्षाको बारेमा के कुरा वताइएको छ, त्यसको छोटो दिग्दर्शन यस लेखमा गर्ने जमर्को गरिएको छ।

जहाँ गुरु शिष्यको उपस्थिति हुन्छ, त्यहीं दीक्षाको दिव्य घटना घटित हुन्छ। यस गुरु शिष्य मिलन कार्यक्रममा गुरु दीक्षा तथा अन्य विविध दीक्षालगायत शक्तिपातयुक्त दीक्षाहरु दिने कार्यक्रम सम्पन्न हुनेछन्। यस सन्दर्भमा जो साधनाको क्षेत्रसँग परिचित हुनुहुन्न अथवा दीक्षा प्राप्त गर्नुभएको छैन वा दीक्षाको बारेमा जानकारी प्राप्त गर्नु भएको छैन, उहाँहरुलाई दीक्षाको बारेमा सामान्य जानकारी दिने यस लेखको उद्देश्य हो।

वस्तुतः दीक्षाको बारेमा स्पष्ट शब्दमा भन्नु पर्दा यो जानकारीको विषयभन्दा अनुभवको विषय हो जसलाई दीक्षा प्राप्त गरेर नै अनुभव गर्न सकिन्छ। तैपनि यहाँ आदरणीय पाठक वर्गको जिज्ञासालाई दृष्टिगत गर्दै दीक्षाका केही शास्त्रीय पद्धतिको बारेमा प्रसंग प्रस्तुत गरिन्छ।

प्रथमतः दीक्षा गुरु शिष्यको मिलन हो र एक अर्काप्रति स्वीकारोक्तिको भाव हो। दीक्षा एक संस्कार हो जसको माध्यमबाट शिष्यले नयाँ जन्म ग्रहण गर्दछ। शास्त्रमा उल्लेख छ-

**जन्मना जायते शुद्र, संस्कारात् द्विज उच्यते।**
**वेदाभ्यासात् भवेत् विप्रः, ब्राहमण ब्रह्म वोधतः॥**

जन्मबाट नै न कोही गुरु हुन्छ न कोही शिष्य, जन्म त सबैको एउटै प्रक्रियाबाट हुन्छ सामान्य मानवको रुपमा। एउटा मानव तब महान् बन्छ जब ऊ संस्कारित हुन्छ। यो संस्कार उसले गुरुबाट प्राप्त गर्दछ र गुरुले सर्वप्रथम दीक्षाको माध्यमबाट उसलाई महान् बनाउने क्रम शुरु गर्नुहुन्छ।

दीक्षाबाट नै साधनाको अभ्यास गराइन्छ र अभ्यासबाट पूर्ण भएपछि अर्थात् आत्मबोध प्राप्त भएपछि, ब्रह्मलाई जानेपछि मात्र ब्राह्मण हुन्छ। यसकारण दीक्षा संस्कार भएको व्यक्ति सामान्य व्यक्तिभन्दा उच्च मानिन्छ किनकि अब त्यस व्यक्तिमा आध्यात्मिक उच्चता प्राप्त गर्ने सम्भावना प्रवल छ।

स्कन्दपुराणअन्तर्गत गुरुगीतामा दीक्षाको बारेमा यस्तो भनिएको छ-

**सर्वं स्यात्सफलं कर्म। गुरु दीक्षा प्रभावतः।**
**गुरु लाभात् सर्वलाभो। गुरु हीनस्तु बालिशः॥१५५॥**

गुरु दीक्षाको प्रभावले सबै कर्म सफल हुन्छन्। गुरु प्राप्त हुनु नै सबै कुरा प्राप्त हुनु हो, गुरु विनाको व्यक्ति बालकजस्तै हुन्छ।

**गुरु मंत्रो मुखे यस्य।**
**तस्य सिद्धयन्ति नान्यथाः।**
**दीक्षया सर्व कर्माणि।**
**सिद्धयन्ति गुरु पुत्रके॥१५८॥**

जसको मुखमा गुरु मन्त्र छ त्यसका सबै कर्म सिद्ध हुन्छन्। दीक्षा तथा साधनाका अरु कर्महरु गुरु पुत्रबाट सिद्ध हुन्छन्। यस शलोकबाट के पष्ट हुन्छ भने गुरुको अभावमा दीक्षा तथा साधना र अन्य शुभकर्महरु र गुरुको दायित्व गुरु पुत्रमा हुन्छ र गुरु पुत्रलाई गुरु समान मान्नुपर्छ भन्ने यस शलोकको आशय हो।

**ना जानन्ति परं तत्त्वं।**
**गुरु दीक्षा पराङमुखाः॥**
**भ्रान्ताः पशुसमा ध्येता।**
**स्वपरिज्ञान वर्जिता :॥१८५॥**

गुरु दीक्षा नलिएका व्यक्तिहरु परं तत्वलाई जान सक्दैनन्। पशुजस्तै यताउता भ्रमित भइरहन्छन् र आत्मज्ञानबाट वर्जित हुन्छन्।

**चित्त त्याग नियुक्तश्च।**
**कोध गर्व विवर्जित :।**
**द्वैतभाव परित्यागी।**
**तस्य दीक्षा विधीयते॥१८९॥**

विषयी चित्तको त्याग गर्नु, क्रोध र घमण्ड रहित हुनु, गुरुसँग एकाकार हुनु यिनै कुराको लागि दीक्षाको विधान गरिएको हो।

मंत्र रहस्यमा परमपूज्य (डा. नारायण दत्त श्रीमालीजी) दीक्षाको बारेमा भन्नुहुन्छ- गुरुले दीक्षा दिनुको तात्पर्य हो- ज्ञान सिद्धि एवं शक्तिको दान तथा अज्ञान, पाप एवं दरिद्रताको नाश नै 'दीक्षा' हो। चाहे कति नै समय बितोस् तर जबसम्म दीक्षा प्राप्त हुँदैन तबसम्म सिद्धिको मार्ग सही रुपमा प्रशस्त हुँदैन।

दीक्षा एक तेजपुंज हो जसबाट साधकको मनमा निहित अज्ञान एवं अविद्याको नाश हुन्छ, उसको शरीरका अशुद्धिहरु समाप्त हुन्छन् तथा गुरुद्वारा ज्ञान संचार एवं आत्मदानको प्रक्रिया हुन्छ ।

दीक्षाका तीन भेद छन्- १. शक्ति २. शाम्भवी ३. मान्त्री ।

कुण्डलीनी जागरण गरेर त्यसलाई ब्रह्मनाडी हुँदै परम शिवमा मिलाउनुलाई नै शक्ति दीक्षा भनिन्छ ।

श्री गुरुदेव आफ्नो प्रसन्नताको क्षणमा दृष्टि अथवा स्पर्शबाट शिष्यलाई स्वयंवत् (आफै स्वरुप) गराउने क्रियालाई नै शांभवी दीक्षा भनिन्छ ।

मंत्रोपदेशद्वारा गुरु ज्ञान दिनुहुन्छ त्यसलाई मान्त्री दीक्षा भनिन्छ ।

सबै साधक शक्तिपातको पात्र हुँदैनन्, मान्त्री दीक्षाबाट नै उनीहरु यसको अधिकारी हुन्छन् ।

शारदा पटेल ग्रन्थमा दीक्षाका चार भेद बताइएका छन्-

१. क्रियावती- यसमा कर्मकाण्डको पूरा उपयोग हुन्छ ।

२. वर्णमयी- यो न्यास रुप हो । वर्णको अनुलोम विलोम गतिवाट शिष्यको शरीरमा समस्त वर्णलाई संचार गर्ने क्रियालाई वर्णमयी दीक्षा भनिएको छ ।

३. कलावती- मानव शरीरमा पाँच शक्तिहरु छन् ।

क. पैतालादेखि घुँडासम्म - निवृत्ति शक्ति

ख. घुँडादेखि नाभिसम्म - प्रतिष्ठा शक्ति

ग. नाभिदेखि कण्ठसम्म - विद्या शक्ति

घ. कण्ठबाट - ललाटसम्म - शान्ति शक्ति

ङ. ललाटबाट - शिखासम्म - शान्त्यतीत कला शक्ति ।

गुरुले एक शक्तिलाई दोस्रो शक्तिमा समाहित गरेर शिष्यलाई शिवरुप गरिदिनु हुन्छ, यसैलाई कलावती दीक्षा भनिएको छ ।

४. वेधमयी - षट्चक्र भेदनलाई नै वेधमयी दीक्षा भनिन्छ । जब गुरुदेवले कृपा गरेर शक्तिपातद्वारा शिष्यको षट्चक्र भेदन गरिदिनु हुन्छ तब त्यसलाई वेधमयी दीक्षा भनिन्छ ।

५. पंचायतनी दीक्षा- माथिका चार प्रकारका दीक्षाका अतिरिक्त यो दीक्षा पनि प्रचलित छ, यसमा शक्ति, विष्णु, शिव, सूर्य र गणेश यी पाँचमध्ये एकलाई प्रधान मानेर त्यसलाई बीचमा स्थापित गरेर अरु चार देवतालाई चारै दिशामा स्थापित गरेर पूजा एवं साधना गराएर दीक्षा दिइन्छ ।

६. क्रम दीक्षा- शास्त्रमा क्रम दीक्षाको पनि उल्लेख छ । यसमा चिंतन एवं गुरु-शिष्य सेवा सहयोग बनिरहन्छ । सेवा भाववाट गुरु-शिष्यको घनिष्ठता बढ्दै जान्छ एवं गुरु आफ्नो शिष्यलाई बिस्तारै आत्मवत् बनाउनुहुन्छ ।

'दीक्षा' भइसकेपछि गुरुले केही मर्यादा स्पष्ट गर्नुहुन्छ, जसको पालन शिष्यको लागि उचित रहन्छ । नारद पांचरात्रमा यस प्रकारका केही मर्यादाहरुको उल्लेख छ-

**स्व मन्त्रो नोपर्देष्टब्यो वक्तव्यश्च न संसदि ।**
**गोपनीये तथा शास्त्रं रक्षणीयं शरीरवत् ॥**
**वैष्णवानां पराभक्तिराचार्याणां विशेषतः ।**
**पूजनं च यथाशक्ति तानापन्नांश्च रक्षयेत् ॥**
**प्राप्त पायतानद्विष्णोः शिरसा प्रणतो वहेत् ।**
**निक्षिपेदम्भसि ततो न पतेद वनौ यथा ॥**
**सोमसूर्यान्तरस्यं च गवाश्वत्थाग्निमध्यगम् ।**
**सोमसूर्यान्तरस्थं च गवाश्वत्थाग्निमध्यगम् ।**
**भावयेद्दैवतं विष्णुं गुरु विप्रशरीरगम ॥**
**प्रदक्षिणे प्रयाणे च प्रदाने च विशेषतः ।**
**प्रभाते च प्रवासे च स्वन्मन्त्रं बहुशः स्मरेत् ॥**
**स्वप्ने वाक्षि समक्षं वा आश्चर्य मति हर्षदम ।**
**अकस्माद् यदि जायेत न ख्यातव्यं गुरोर्विना ॥**

अर्थात् गुरुद्वारा जुन मन्त्र दिइएको छ, त्यसलाई अरु कसैलाई पनि नबताउनु, सभामा नभन्नु, आफ्नो पूजा विधि पनि कसैलाई नबताउनु, यससँग सम्बन्धित शास्त्रको रक्षा शरीर जस्तै गर्नु, वैष्णव तथा आचार्यप्रति सम्मान प्रकट गर्नु, तिनको पूजा गर्नु तथा आपत्तिग्रस्त भएमा तिनको सेवा गर्नु, भगवान्‌को मन्दिरबाट जुन फूल प्रसाद प्राप्त हुन्छ त्यसलाई शिरमा राख्नु, जमीनमा नखसाल्नु र कुनै कुवा जलाशयमा विसर्जित गर्नु, सूर्य, चन्द्रमा, गाई, पीपल, अग्नि, ब्राह्मण र गुरुमा आफ्नो इष्टदेवको दर्शन गर्नु तथा यात्रा कालमा, प्रवासमा बिहान साँझ बारम्बार ईश्वरको ध्यान गर्नु, स्वप्नमा वा जाग्रत् अवस्थामा कुनै चमत्कार वा अलौकिक दृश्य देखियो भने त्यसलाई अरु कसैलाई नभनेर मात्र आफ्नो गुरुदेव समक्ष व्यक्त गर्नु ।

यस प्रकार सबै मर्यादाहरुको पालन गर्दै जुन शिष्य गुरुसेवामा लीन रहन्छ, उसले निश्चय नै सफलता पाउँछ ।

दीक्षाको वास्तविक महत्त्व 'दीक्षा' लिएर नै अनुभव गर्न सकिन्छ । यसलाई शब्दमा व्यक्त गर्न सकिँदैन । यो संकेत गर्ने प्रयास मात्र हो । यो संकेतलाई सबैले बुझ्नु जरुरी छ ।

जय गुरुदेव !

***विष्णु प्र. खनाल, गोरखा दरबार,*** *गोरखा ।*

# गणपति भगवान् गणेश

'गणपति' शब्दको प्रथम उल्लेख ऋग्वेदमा परेको छ । ऋग्वेदमा 'गणानात्वा गणपतिं हवामहे...' भन्ने वाक्यांश पर्नुका साथै उनलाई 'ब्राह्मणस्पति' भनिएको पाइन्छ (ऋग्वेद २.२३१) । वेदमा नै उनलाई 'महाहस्ती', 'एकदन्त', 'वक्रतुण्ड' र 'दन्ती' समेत भनिएको पाइन्छ । तर ऋग्वेदमा पाइएको गणपति शब्दलाई गणेश जनाउने शब्द नमानेर वृहस्पति जनाउने शब्द मानिएको छ । भण्डाकरले गणेशलाई वृहस्पतिको अर्थमा वृद्धि र ज्ञानका देवता मानेका छन् । गोपीनाथ रावले भने गणेश र वृहस्पतिलाई एउटै देवता मानेका छन् । गणपतिको शाब्दिक अर्थ गण वा समुदायको स्वामी भन्ने हुन्छ । गणहरुको स्वामी वा ईश्वरका रूपमा उनलाई गणेश भनिएको हो । मानवगृहसूत्रमा गणेशलाई प्रथम पटक विनायक भनिएको छ र यसै समयताकादेखि गणेशलाई सर्वशक्तिमान् ईश्वरको रूपमा मानिएको पाइन्छ । मानवगृहसूत्रमा चार प्रकारका विनायकको उल्लेख छ– १) शाकलटकट २) कुष्माण्ड राजपुत्र ३) उस्मिन ४) देवयजन । यस ग्रन्थमा विनायकको दयादृष्टि नहुँदा मान्छेको मस्तिष्क विकृत हुने र उसले अनेक प्रकारका अस्वाभाविक कार्यहरु गर्न थाल्ने, कहिले घाँस काट्ने, कहिले आफ्नै शरीरमा लेख्ने, कहिले उडे जस्तो गर्ने आदि जस्ता कार्यहरु गर्न थाल्दछन् भन्ने उल्लेख छ । गणपतिको कुदृष्टि पऱ्यो भने न राजाले शासन गर्न सक्छ, न कन्याको विवाह हुन सक्छ, न विवाहितालाई सन्तान हुन सक्छ । व्यापारीको व्यापार र कृषकको कृषि विफल हुन्छ तथा अनेकौं बाधा र अवरोधहरु सृजना हुने कुरा मानवगृहसूत्रमा उल्लेख गरिएको छ । विनायक वा गणेशको कुदृष्टिबाट बच्न पीडित व्यक्तिले चारै दिशाबाट ल्याएको पानी र माटोले स्नान गर्नु पर्ने, तुरुन्तै सर्स्यूँबाट निकालिएको तेलले चाारवटै विनायकको पूजा गर्नुका साथै धान, चामल, काँचो र पाकेको माछा र विभिन्न प्रकारका दालहरुले आहुति दिनु पर्ने उल्लेख छ । यस्तो पूजा विधिले विनायकको कुदृष्टि समाप्त हुनेछ भनी लेखिएको पाइन्छ । याज्ञवल्क्यस्मृतिमा पनि मानवगृहसूत्रमा उल्लिखित विधानलाई नै दोहोऱ्याइएको छ । याज्ञवल्क्यको

**मौदगल पुराणमा गणेशको 'ग' अक्षरलाई दृश्य अदृश्य दुवै जगतवाचक र 'ण' अक्षरलाई सम्पूर्ण रुप बोधक तथा दुवै अक्षरका स्वामी गणेशलाई सर्वोच्च देवताका रुपमा स्थापित गरिएको पाइन्छ ।**

समयसम्ममा गणपति पूजा विधान अझ धेरै विकसित भइसकेको थियो । उनको स्मृतिमा मानिसका कामहरुमा विघ्न बाधा उपस्थित गर्न ब्रह्मदेवले विनायकलाई गणपति बनाएको उल्लेख छ । यस प्रकार मानवगृहसूत्र तथा याज्ञवल्क्यस्मृतिमा लेखिए ताकासम्म ४ विनायकहरु एउटै गणपति विनायकमा परिणत भएको पाइन्छ । यस ताकासम्ममा उनका ६ नामहरु देखिन्छन् । जसमध्ये चार नाम मानवगृहसूत्रमा उल्लिखित नामहरु नै हुन् भने अन्य दुई नाम 'मित' र 'सम्मित' भन्ने देखिन्छन् । याज्ञवल्क्यको स्मृति लेखिए ताका विनायककी आमा अम्बिका मानिन थालिएको थियो । भण्डारकर र गोविन्द गोपाल मुखर्जीले गणपतिको उपासना ई० पू० का शताब्दीतिरबाटै शुरु

भइसकेको मानेका छन् । बौद्यायानगृहसूत्र र नारायण उपनिषद्ले पनि गणपति, वक्रतुण्ड र दन्तिनको उल्लेख गरेका छन् र गणपति गायत्रीको चर्चा गरेका छन् । यसै गरी गणपतितापनीय उपनिषद्ले भने गणेशलाई ब्रह्मस्वरूप मानेको छ । अर्थवशिरस उपनिषद्ले गणेशलाई रुद्र वाचक मानेको छ ।

महाभारतको अनुशासन पर्वमा गणेश्वर र विनायकलाई मानिसहरुको काम र दायित्वहरुमाथि सुपरीवेक्षण गर्न सर्वत्र उपस्थित रहने देवता भनिएको छ । साथै उनलाई अनिष्टहरुलाई नाश गर्ने देवताको रूपमा चर्चा गरिएको छ । पुराणहरुमा भने गणेशसँग सम्बन्धित अनेकौं कथा, उपाख्यान र विवरण पाइन्छन् । मौदगल पुराणमा गणेशको 'ग' अक्षरलाई दृश्य अदृश्य दुवै जगतवाचक र 'ण' अक्षरलाई सम्पूर्ण रूप बोधक तथा दुवै अक्षरका स्वामी गणेशलाई सर्वोच्च देवताका रूपमा स्थापित गरिएको पाइन्छ । यस पुराणले महागणपति ऊर्ध्व गणपति, पिंगल गणपति आदि गणेशका रूपहरुको चर्चा गरेको पाइन्छ । पुराणहरुमा उनलाई शिवको द्वितीय पुत्र, विघ्न नाशक र प्रत्येक शुभ कार्यमा शुरुमै गणेशको अनिवार्य रूपमा पूजा गर्नु पर्ने उल्लेख छ ।

गणेशका मूर्तिहरु भारतमा गुप्त राजाहरुका पालादेखि निर्माण हुन शुरु भएको पाइन्छ । मूर्ति निर्माणको यो क्रम पछिल्ला युगसम्म पनि निरन्तर चलि नै रह्यो । भारतका प्राय: सबै प्रान्तहरुमा गणेशका मूर्तिहरु पाइन्छन् । यस्ता मूर्तिहरु जम्मा तीन मुद्रामा निर्मित भएको देखिन्छ– उभिएको, बसेको र नृत्य गर्दै गरेको । सबै मूर्तिमा गणेशलाई हात्तीसुँढे र गजभूँडे को रूपमा प्रस्तुत गरिएको छ भने उनको वाहन मूसा चित्रित गरिएको पाइन्छ ।

भण्डारकर महोदयका अनुसार पाँचौं, आठौं शताब्दीको अन्तरालमा गणपति सम्प्रदाय समाजमा देखिइसकेका थिए । त्यसैले छैठौं शताब्दीसम्ममा लेखिसकेको याज्ञवल्क्यस्मृतिमा सम्प्रदायकै रूपमा गणपतिको पूजा विधिको उल्लेख गरिएको पाइन्छ । डा. जयशंकर मिश्रका अनुसार कालान्तरमा गणपति सम्प्रदायका जम्मा ६ वटा शाखाहरु समाजमा प्रचलित भए– १) त्यो सम्प्रदाय जसमा गणपतिलाई आदिदेव तथा सृष्टिकर्ता मानिन्छ । यस सम्प्रदायलाई महागणपति सम्प्रदाय मानिन्छ । २) हरिद्रगणपति सम्प्रदाय, जसमा गणपतिको दाँतको चिनो आफ्ना पाखुरामा डामेर अंकित गरिन्छ र उपासकले पहेँलो वस्त्र र जनै लगाउँछन् । साथै चतुर्भुज, त्रिनेत्र र हातमा पाश, कुस र दण्डयुक्त गणेशको पूजा गर्दछन् । ३) उच्छिष्ट गणपति सम्प्रदाय गणपतिसँग सम्बन्धित एउटा उग्र सम्प्रदाय हो । त्यसैले यसमा तन्त्रवादको प्रभाव परेको पाइन्छ । यस सम्प्रदायका अनुयायीहरु मासु, रक्सी आदि सेवन गर्दछन् र निधारमा रातो मुद्रा अंकित गर्दछन् । ४) नवनित गणपति सम्प्रदाय ५) स्वर्ण गणपति सम्प्रदाय र ६) सन्तान गणपति सम्प्रदाय । यी अन्तिम ३ सम्प्रदायका अनुयायीहरु गणेशको मूर्ति प्रतिष्ठा गरेर उपासना गर्दछन् । प्राय: सबै हिन्दु परिवारमा वर्तमान समयमा पनि गणेशको पूजा अनिवार्य ठानिन्छ ।

नेपालमा गणेशको उपासना कहिलेदेखि शुरु भयो भन्ने कुरा यकीनका साथ भन्न सकिँदैन । भारतमा गणेश उपासनाको परम्परा गुप्त राजाहरुको समयदेखि प्रचलित भएको मानिन्छ । सम्भवत: त्यसै समयदेखि नेपालमा पनि गणेशको उपासना पद्धति शुरु भयो होला भन्न सकिन्छ । पछिल्लो लिच्छविकालीन उमामहेश्वर फलकहरुमा गणपतिका रूपमा गणेशलाई नृत्य मुद्रामा देखाइएको पाइन्छ । मेरी श्लसरले लिच्छविकालीन एक शिलापत्रको उल्लेख गरेकी छन् जसमा 'देवी'लाई गणहरुको बीचमा बसेको देखाइएको छ र त्यसै मुनि गणेशको एउटा पुरानो मूर्ति पशुपति मन्दिरको पश्चिम ढोकानिर रहेको छ र त्यो मूर्ति विच्छविकालीन जस्तो छ भनी उल्लेख गर्नुभएको छ ।

मल्लकामा आएर गणेशको पूजा, उपासनाको परम्परा व्यापक भएको पाइन्छ । यसताका बनेका गणेशका मूर्तिहरु सडकका छेउ, चौबाटो, जंगल र खोला छेउ, प्रवेशद्वार हरुमा, ढोकाहरुमा, आँगन, धर्मशाला, प्रत्येक देवदेवीका मन्दिरहरुमा पाइन्छन् । मल्लकालमा लेखिएका प्रत्येक ग्रन्थहरुको प्रारम्भ 'ॐ गणेश'बाट भएको छ चाहे यस्ता ग्रन्थहरु जुनसुकै सम्प्रदायका किन नहोऊन् । मल्लकालमा गणेशका मूर्तिहरु बाहेक अनेकौं गणेशका चित्रहरु, ग्रन्थ चित्र र भित्ते चित्रका रूपमा पाइन्छन् । यस ताका अन्य ठूलठूला देवदेवीहरुको दर्शन गर्दा शुरुमा गणेशको मूर्तिलाई परिक्रमा गरेर त्यसपछि मात्र अन्य देवदेवीको दर्शन गर्ने चलन चलेको पाइन्छ । उदाहरणको लागि बूढानीलकण्ठको

दर्शन गर्दा नजिकको गणेशको परिक्रमा शुरुमा गर्नु पर्ने परम्परा अझै पनि विद्यमान छ । यस युगमा गणेशको उग्र र शान्त गरी दुवै रूपको पूजा गर्ने परम्परा रह्यो । उनको शान्त रूपमा मंगलमय देवतास्वरूप उनलाई दीयो बालेर फलफूल, लड्डु र दुबो चढाएर पूजा गरिन्थ्यो भने उग्र रूपमा डरलाग्दो देवता स्वरूप उनलाई जाँड, रक्सी र कुखुरा, बोकाको रगतद्वारा पूजा गरिन्थ्यो ।

ईशाको पन्ध्रौं शताब्दी ताकादेखि गणेशका अनेकौं मूर्तिहरु बनाइन थालेको पाइन्छ । यस ताकाको पहिलो मूर्ति बनेपाबाट प्राप्त गणेश मूर्ति हो जुन वि.सं. १५० ९ तिरको हो । गणेशको यो मूर्तिमा ६ वटा हातहरु देखाइएका छन् । यसै गरी पाटनको कुम्भेश्वर मन्दिर नजिकै यसै ताकाको गणेशको १२ हाते मूर्ति, वनेपाको गणेश मूर्ति पाइएका छन् । सत्रौं शताब्दीतिरको एउटा १६ हाते गणेश मूर्ति छ जुन आफ्नी शक्तिसहित छ । यस गणेशको शिरमा फणायुक्त नाग अंकित छ । गणेशका मन्दिरहरुमा मल्लकालीन ४ मन्दिरहरु प्रमुख मानिन्छन् । १) काठमाडौंको अशोकविनायक, २) भादगाउँको सूर्यविनायक, ३) चोभार वाग्मती नदी किनारको जलविनायक र ४) चाबहिलको कार्यविनायक । यी गणेशका मन्दिरहरुमध्ये चोभारको विनायक मन्दिरमा प्रताप मल्लको वि.सं. १५११ को शिलालेख पनि पाइन्छ । गणेशको मूर्ति वा चित्र बनाउँदा भने उभिएको, नाचिरहेको र बसेको अवस्थामा बनाउने चलन रहेको पाइन्छ । प्रताप मल्लको पालादेखि गणेश मूर्ति बनाउने शैलीमा तान्त्रिक प्रभाव परेको देखिन्छ । यस ताकादेखि धेरै टाउका भएका गणेश वा शक्ति सहितको महागणेश बनाउने परम्परा चलेको पाइन्छ । यस ताकाका धेरैजसो टोल, गाउँका गणेशहरु टुप्पोतिर चुच्चो परेका वा हात्तीको सूँढ झैं आकृति भएका ढुङ्गा मात्र देखिन्छन् ।

जे.सी. रेग्मीज्यूले गणेशसम्बन्धी मध्य ताकाका दुईवटा अभिलेखहरुको चर्चा गर्नु भएको छ । यी मध्ये प्रथम चिकमवही पाटनको वि.सं. १४७२ को अभिलेख हो जसमा गणेशको स्तुति गरिएको छ । अर्को वि.सं. १५०९ को साँगाको अभिलेख हो जसमा गणेश मूर्ति स्थापना गरिएको चर्चा गरिएको छ । गणेशलाई हिन्दु देवताको रूपमा मल्ल युगभरि पूजा गरिएता पनि बौद्ध धर्मावलम्बीहरुले पनि गणेशलाई आफ्ना देवताको रूपमा मान्यता दिएको पाइन्छ।

बौद्ध विहारहरुको द्वारपालको रूपमा गणेशलाई स्थापना गर्ने चलन रहेको पाइन्छ । यसैगरी बोधिसत्व मञ्जुश्रीको रक्षकको रूपमा कुमार र गणेशका मूर्तिहरु स्थापित भएका पनि पाइन्छन् । गणेश मन्दिरहरुमा ब्राह्मणहरुको बदला ज्यापूहरुलाई पूजारी राख्ने चलन छ । साथै कतिपय गणेश स्थानमा देवीलाई झैं गणेशलाई पनि पशुवली दिएर पूजा गरिन्छ ।

जय गुरुदेव !

(स्रोत : हिन्दु समाज र धर्म)

पूजनीय गुरुमाता
भगवती देवी श्रीमालीज्यूको
ऐतिहासिक अभिनन्दन
समारोह एवं अन्तर्राष्ट्रिय
साधना शिविरको अभूतपूर्व
सफलताका लागि
परमपूज्य सद्गुरुदेवहरु एवं
माताजीको चरणकमलमा
सभक्ति प्रार्थना गर्दछौं ।

# पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको राष्ट्रिय अभिनन्दन समारोह एवं अन्तर्राष्ट्रिय साधना शिविर

## मूल आयोजक समिति

पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको राष्ट्रिय अभिनन्दन समारोह एवं अन्तर्राष्ट्रिय साधना शिविर आयोजनाका लागि मूल आयोजक समिति र यसअन्तर्गत विभिन्न उपसमितिहरु गठन भएका छन् । सिद्धाश्रम शक्ति केन्द्र नेपालको आयोजनामा सम्पन्न हुने यस कार्यक्रमका लागि गठित मूल आयोजक समिति र उपसमितिमा निम्नलिखित पदाधिकारी एवं सदस्यहरु रहेका छन्:-

**(क) मूल आयोजक समिति- सिद्धाश्रम शक्ति केन्द्र**

अध्यक्ष– रामजी अर्याल, उपाध्यक्ष– विन्देश्वरी वराल, सचिव– भोजराज रेग्मी, कोषाध्यक्ष– प्रभुसुन्दर श्रेष्ठ, सह-कोषाध्यक्ष– कुलबहादुर कार्की

**(ख) उप समिति**

(१) **व्यवस्थापन** : आश्रम व्यवस्थापन समूह + कास्की

जयलाल गुरुङ, हरि भट्टराई, शकुन्तला तिमिल्सिना, देवेन्द्र विक्रम, ज्ञानु रेग्मी, दशरथ थापा, सालिकराम सिलवाल, सुनिता रेग्मी, दिन कुमार के.सी., गोकुल लिम्बू, लक्ष्मण कार्की, भूपेन्द्र गिरी, बलराम कार्की, विष्णु सापकोटा, मेघराज घिमिरे, वृहस्पति सापकोटा, भोजराज सापकोटा, राधा सापकोटा, बलराम पौडेल, रामचन्द्र गिरी, हरिप्रिया पौडेल, सारदा पराजुली, मिरा तुलाचन, लक्ष्मी तझ्या, विष्णु पराजुली, दिव्यलक्ष्मी श्रेष्ठ, खगराज बराल, भरत गिरी, बुद्धि देवकोटा, लक्ष्मी पौडेल, सरस्वती गुरुङ, बुद्धलक्ष्मी श्रेष्ठ, शशी भारी, राधा पराजुली, लक्ष्मी जि.सी., देवी गौतम, हरिमाया गहतराज

(२) **अन्तर्राष्ट्रिय समन्वय** : सूचना प्रवाह उपविभाग + गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम

संयोजक–सुमन आचार्य, सदस्यहरु– थानेश्वर गुरागाईं, आशा थापा, आशिष रेग्मी, अपूर्व नेपाल, विक्रम पाठक, सन्दीप रिमाल, रामेश्वर श्रेष्ठ, मनोहर अधिकारी, विनोद वराल, जयबहादुर मल्ल

(३) **आर्थिक** : अर्थ व्यवस्थापन उपविभाग

संयोजक– प्रभुसुन्दर श्रेष्ठ, सदस्यहरु– विनायक ज्ञवाली, रामगोपाल फैजु, मिङमे शेर्पा, सन्ध्या आचार्य

(४) **साधना तथा पूजन** : आन्तरिक प्रशासन उपविभाग + लमजुङ

संयोजक– कैलाश सुब्बा, सदस्यहरु– गोपाल बाबु तिवारी, कृष्णप्रसाद पन्त, सविता वराल, सम्झना पौडेल, सुशीला पौडेल, वसन्त गुरुङ, कान्ति हतुवाल, आराधना पन्त, राजेन्द्र मानन्धर, विजय मानन्धर, निराजन अधिकारी, राज्यलक्ष्मी वस्नेत, सृजना वस्नेत, अम्बिका कोइराला, मिना थापा, जयराम के.सी., आशा थापा, आरती प्रधान, मुना घले, रञ्जना घिमिरे, अजय चौरसिया, अञ्जु हमाल, शिवकुमारी वराल, कल्पना थापा, लोकबहादुर नेपाली, अनुषा सैंजु, धन रानाभाट, धनबहादुर लुङ्गेली, बेलबहादुर गुरुङ, सविता सुनुवार, जयन्ती मल्ल, सन्तुमाया लामिछाने, कविता के.सी., ज्योति महर्जन, सारदा महर्जन, लेखनाथ खापुङ, रत्नबहादुर खत्री, गोमा भट्टराई, मैंया महर्जन, गंगा माया गुरुङ, ज्योति सैंजु, बलमाया त्रिपाठी, दिलबहादुर लुङ्गेली, भवानी थपलिया, कल्याणी श्रेष्ठ, कविता श्रेष्ठ, महेश डंगोल

(५) **प्रचारप्रसार** : प्रचार प्रसार तथा विज्ञापन उपविभाग + तनहुँ

संयोजक– मदनलाल श्रेष्ठ, सदस्यहरु– गोविन्द पौडेल, अर्जुन पौडेल, मधु कार्की, श्यामलाल श्रेष्ठ, जमुना तिवारी, कुन्द्र सिंह मगर

(६) **प्रकाशन** : कम्प्युटर तथा फोटोग्राफी उपविभाग

संयोजक– दिनकुमार के.सी., सदस्यहरु– देवेन्द्र विक्रम, बालकृष्ण श्रेष्ठ, सुमन आचार्य, सृष्टि सुवेदी, मधुमति रंजित, विक्रम पाठक, सजिन अमात्य, सुरेन्द्र कुशवाह, रविन्द्र दुलाल, जयकृष्ण तिमिल्सिना, आशिष रेग्मी, सन्दिप रिमाल, सबल आचार्य, साकार लोहनी, अपूर्व नेपाल, उमेश के.सी., सजेश गुरुङ, शैलेश नकर्मी, दिपक महर्जन, थानेश्वर गुरागाईं

(७) **कार्यकर्ता परिचालन** : संगठन उपविभाग + गोरखा

संयोजक– गोकुल लिम्बू, सदस्यहरु– भूपेन्द्र गिरी, बेलबहादुर गुरुङ, विष्णु ज्ञवाली, सुधा तण्डुकार, किशोर कुमार अकेला, सजना योगी, कल्पना कुँवर

(८) **प्राथमिक उपचार** :– शिष्टाचार तथा स्वास्थ्य उपविभाग + सर्लाही

संयोजक– ज्ञानु रेग्मी, सह-संयोजक– केशव पाण्डे, सदस्यहरु– कृष्णकुमार एस्माली, नन्दा विष्ट, भोजराज जोशी, सजिन अमात्य, सारदा पुडासैनी, अमृता भट्टराई, मीनु श्रेष्ठ, सुस्मिता देवान, राम पूजन ठाकुर, सरिता सापकोटा, सुभद्रा कार्की, सूर्य उपाध्याय, विजय सिंह, निशा ठाकुर, तारा गौतम, उमेश हिङमाङ, रामचन्द्र प्रसाईं, प्रेम खत्री, अम्बिका ढकाल, अम्बिका खड्का, उज्ज्वल श्रेष्ठ, टोपबहादुर वस्नेत, रामप्रसाद नेपाल, सुदर्शन कुँवर, सुदेश ढकाल, उषा भुजेल, चन्द्रप्रसाद पराजुली, लोकेन्द्र खड्का, सरस्वती कार्की, मैंया कार्की, रामकला कार्की, दिपक पराजुली, सुनिता कोइराला, अम्बिका थापा, देवी बुढाथोकी, प्रमोदकुमार, चन्द्र कार्की, सुकदेव तण्डुकार, निर्मला घिमिरे, इच्छा राम कार्की

(९) **जनसम्पर्क** :– आन्तरिक जनसम्पर्क उपविभाग + सिन्धुली

संयोजक– सुनिता रेग्मी, सदस्यहरु– रम्बा विष्ट, मिङमे शेर्पा, आरती प्रधान, बलमाया त्रिपाठी, लोगकुमारी तिमिल्सिना, सारदा महर्जन, पवित्रा खरेल, मोहनदेवी डंगोल, लक्ष्मण भट्टराई, सुप्रभा नकर्मी, शोभा पौडेल, अञ्जु हमाल, निशा प्रधानांग, कृष्णलक्ष्मी प्रजापति, राजन थापा, भोलानाथ विष्ट, राजकुमार सिलवाल, श्यामबहादुर सिलवाल, विन्दु देवकोटा, पुरुषोत्तम थापा, विना प्रजापति, सहदेव थापा, ज्योति शाही, मुना प्रजापति, पुरुषोत्तम थापा, पुष्कर थापा, हरिश्चन्द्र घिमिरे, आरती सुनुवार, हेमन्त रिजाल, चन्द्रविक्रम शाह, लेखनाथ खापुङ, विजया खड्का, सुदिप कारंजित, रोशनी प्याथ, नन्दा विष्ट, अर्चना सुवेदी, अनिल घिमिरे, सारदा न्यौपाने, अनिता खड्का, स्मृति थापा

(१०) **स्वागत सत्कार** :– बाह्य जनसम्पर्क उपविभाग + चितवन

संयोजक– शकुन्तला तिमिल्सिना, सदस्यहरु– उद्धव सुवेदी, हरिराज वास्कोटा, शिव नारायण महर्जन, सुमित्रा गौतम, जयबहादुर राई, रेखा क्षेत्री, अञ्जु थापा, अञ्जु सापकोटा, जुनु राई, पदमसिंह धामी, कल्पना मैनाली, देवकी पौडेल, रामप्रकाश श्रेष्ठ, सारदा श्रेष्ठ, मुना गुरुङ, सुमित्रा तामाङ, सामुमैंया श्रीवास्तव, शोभा ज्ञवाली, रविन्द्र खड्का, उल्जना तण्डुकार, मोतीराज वराल, उर्मिला चालिसे, सबल आचार्य, उमेश के.सी., भवानी के.सी., सुशीला सुवेदी, वटुककृष्ण खड्का, प्रचण्डराज भण्डारी, जमुना तिवारी, ज्योति सैंजु, रंजना, रंजुश्री जोशी, जीवन गौतम, लक्ष्मीनारायण महर्जन, गंगालक्ष्मी शाही, आशा थापा, ज्ञानु अर्याल, पद्मा गुरुङ, सुमित्रा सिलवाल, मोहनकृष्ण, जुना प्रजापति, रोशनी प्रजापति, मीना प्रजापति, मीनु प्रजापति, मीरु प्रजापति, दिना प्रजापति, सविना प्रजापति, गीता शर्मा, विमला पाण्डे, सुशीला आचार्य, संगीता सिलवाल, जुलुम श्रेष्ठ

(११) **शिविर स्थल व्यवस्थापन** :– बाह्य प्रशासन उपविभाग + बाह्रबिसे

संयोजक– जयलाल गुरुङ, सदस्यहरु– बुद्धिराज भण्डारी, केशव पाण्डे, कोपिला थापा, श्याम खड्का, अप्सरा पौडेल, गोमा हाडा, पुरुषोत्तम वस्नेत, कपिला पाठक, लक्ष्मी पाठक, गोमा के.सी., दुर्गा खत्री, वनिता पाठक, सकुन पाठक,

सञ्जु तिवारी, विमला जिम्बा, सोमाकान्त राई

(१२) **बसोबास व्यवस्थापन** :– तालिम तथा प्रशिक्षण उपविभाग + ललितपुर
संयोजक– अम्मर भट्ट, सदस्यहरु– बलराम कार्की, शिव लामिछाने, दिपक रत्न कंसाकार, मदन मानन्धर

(१३) **यातायात** :– विशेष कार्यक्रम व्यवस्थापन समिति
संयोजक– ध्रुव विष्ट, सदस्यहरु– अर्जुन विष्ट, भगवान् पाण्डे, बुद्धिराज भण्डारी

(१४) **सुरक्षा** :– पुस्तकालय तथा पत्रिका वितरण उपविभाग + बनेपा
संयोजक– लक्ष्मण कार्की, सदस्यहरु– भगवान् पाण्डे, गोकुल लिम्बू, भूपेन्द्र गिरी, बलराम कार्की, बेलबहादुर गुरुङ, धनबहादुर लुंगेली मगर, केशव पाण्डे, राजेश गुरुङ, बुद्धरत्न शाक्य, नन्द भक्त चित्रकारक, कुलबहादुर कार्की, राजेश प्रजापति, विनोद श्रेष्ठ, सुधा तण्डुकार, राजन खतिवडा, शिवनारायण महर्जन, शिव श्रेष्ठ, पदमसिंह धामी, मधुबहादुर कार्की, ज्ञानेन्द्र पौडेल, भरत पराजुली, तुलसीनारायण श्रेष्ठ, हरिराज बास्कोटा, जयबहादलुर राई, रमिता तण्डुकार, पारश चौचरी, ईश्वरलाल तण्डुकार, सुवास वाग्ले, मदनकृष्ण मानन्धर, कृष्णदेवी तण्डुकार, श्याम श्रेष्ठ, सुनिलनन्द वज्राचार्य, कुबेर थापा, सूर्य उपाध्याय, टिकाराम राई, मुकेश भुजेल, सागर चक्रधर, हरिशचन्द्र श्रेष्ठ, अमर श्रेष्ठ, भोलानाथ विष्ट, राजकुमार खड्का, अनिता वस्नेत, शिवकुमार मण्डल, सुधेश ढकाल, मुराहरि श्रेष्ठ, बटुक कृष्ण खड्का, तेजबहादुर इङनाम, लेखनाथ खापुङ, श्यामबहादुर सिलवाल, यज्ञबहादुर सिलवाल, परशुराम विष्ट, प्रभुराम विष्ट, श्रीप्रसाद श्रेष्ठ, प्रकाश कार्की, रंजित कार्की, सारदा थापा, विजय मानन्धर, उपेन्द्र वस्नेत, रमेश के.सी., सन्तोष गुप्ता, पवित्रा सापकोटा, दिपक रत्न कंसाकार, विमला पाण्डे, सान्नानी सिलवाल, सानुमैंया श्रीवास्तव, रुपा अर्याल, तुलसीनारायण श्रेष्ठ, तारा गौतम, शोभा वराल, सुमित्रा पौडेल

(१५) **प्रसाद व्यवस्थापन** :– आन्तरिक व्यवस्थापन उपविभाग + भक्तपुर
संयोजक– सुमित्रा लामा, सदस्यहरु– माधव वस्नेत, निरज कर्माचार्य, शारदा विष्ट, जयन्ती मल्ल, सरिता सुनुवार, लक्ष्मी के.सी., लक्ष्मी मैनाली, देवकी, मुनु श्रेष्ठ, गोविन्द राजथला, पार्वती महर्जन, लक्ष्मीनारायण महर्जन, नानी मैंया, तुलसी माया, ज्ञानरत्न, गोमा ओभा, तीर्थ, विजय शाही, मञ्जु थापा, राधादेवी, पद्मा अधिकारी, उषा वानिया, देवकी विष्ट, पुकार गुरुङ, सबल आचार्य, पार्वती जोशी, मीना विष्ट, शोभा महर्जन, सावित्री, कुबेर थापा, गंगा ताम्राकार

(१६) **शोभायात्रा तथा सजावट** :– पूजन तथा परामर्श उपविभाग + स्याङ्जा
संयोजक– हरि भट्टराई, सहसंयोजक– ध्रुव विष्ट, उपसंयोजक– दिनकुमार के.सी., सदस्यहरु– विश्वप्रेम ढकाल, बेलबहादुर गुरुङ, अर्जुन वि.सी., मदनलाल श्रेष्ठ, भूपेन्द्र गिरी, सुरेन्द्र थापा, गीता राई, मीना थापा, जयन्ती मल्ल, सविता सुनुवार, विनोद श्रेष्ठ, बुद्धिराज भण्डारी, सजेश गुरुङ, बलराम कार्की, लक्ष्मण कार्की, उमेश के.सी., शिव लामिछाने, विजय शाही, फूलमाला जिम्मा, सुशीला सुवेदी, लोगकुमारी तिमिल्सिना, अजय कुमार चौरसिया, गोमा खत्री, लक्ष्मी पाठक, शकुन पाठक

(१७) **संगीत** :–
संयोजक– देवेन्द्र विक्रम, सहसंयोजक– सुरेन्द्र थापा, उपसंयोजक– राम पूजन ठाकुर, सदस्यहरु– शिवराम वानिया, दशरथ थापा, लव वानिया, हर्कलाल महर्जन, गोकुल लिम्बू, थानेश्वर गुरागाईं, भाइराजा वस्नेत, माधव वस्नेत, अनिता चित्रकार, सुमित्रा सिलवाल, किरण शर्मा, सुमित्रा गौतम, जयन्ती मल्ल, विजय शाही, सजेश गुरुङ, सुस्मिता देवान, आशिष रेग्मी, साकार लोहनी, शिव लामिछाने, बुद्धरत्न शाक्य, मधुमति रंजित, मञ्जुश्री जोशी, प्रतीक्षा राजभण्डारी, सविता सुनुवार, पवित्रा सापकोटा, उत्तम घिमिरे, सावित्री खड्का, संगीता शाक्य, दिपा खड्का, संगीता सिलवाल ।

"बचत गरौं, उचित ब्याजदर प्राप्त गरौं"

| निक्षेप तर्फ मुद्दती | नयाँ ब्याजदर | निक्षेप तर्फ मुद्दती | नयाँ ब्याजदर |
|---|---|---|---|
| ३ महिना | १२ | विशेष बचत | ९ |
| ६ महिना | १२.५० | कर्जा बचत | ९ |
| ९ महिना | १३ | अन्य खाता | ९ |
| १ वर्ष | १३.५० | साधारण बचत | ९.५० |
| १ वर्ष (संस्थागत) | Min balance 50 Lakh negotiable | शेयरधनी बचत | ९.५० |
| २ वर्ष | १३.७५ | ज्येष्ठ नागरिक बचत | १० |
| ३ वर्ष | १४ | नागरिक बचत | १० |
| ४ वर्ष | १४.५० | Couple बचत खाता | १०.५० |
| ५ वर्ष | १५ | काफल बचत | ११ |

**काठमाडौं फाइनान्स लि**

राधेमार्ग, डिल्लीबजार, फोनः ४४३७४०१, ४४३०५२७

पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको ऐतिहासिक अभिनन्दन समारोह एवं अन्तर्राष्ट्रिय साधना शिविर अभूतपूर्व रुपमा सफल होस् भनी शुभकामना व्यक्त गर्दछौं ।

**न्यू पासा क्याटरिङ्ग एण्ड रेण्टल सर्भिस**

ठेचो, ललितपुर

*प्रो. जयराम के.सी. (मो. ९८५१०२९५२९)*

*प्रो. साजन थापा (मो. ९८४१३०३०११)*

भोज, पार्टीमा गुणस्तरिय खानाको लागि र राम्रो व्यवस्थापनको लागि सम्झनुहोस्

**पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको ऐतिहासिक अभिनन्दन समारोह एवं अन्तर्राष्ट्रिय साधना शिविर अभूतपूर्व रूपमा सफल होस् भनी शुभकामना व्यक्त गर्दछु ।**

**लिलादेवी सिम्खडा**

**पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको ऐतिहासिक अभिनन्दन समारोह एवं अन्तर्राष्ट्रिय साधना शिविर अभूतपूर्व रूपमा सफल होस् भनी शुभकामना व्यक्त गर्दछौं ।**

**आनन्द ट्रेड कन्सर्न**

सातदोबाटो, (पेट्रोल पम्प नजिकै) ललितपुर

फोनः ५५४२७८७, ५५५५७१५

यही माघ २०६७ माघ २२ र २३ गते हुन गइरहेको गुरुमाताको अभिनन्दन तथा शिव-लक्ष्मी साधना शिविरको भव्य सफलताको कामना गर्दछौं।

**काठमाडौं एक्सपिरियन्स परिवार**

**Kathamndu Experience Travels & Tours (P) Ltd.**

*P.O.Box 5576, Dillibazar*
*Kathmandu Nepal*
*Tel: 4443609, Fax: +977-1-4443608*
*Email: Kett@wlink.com.np*

**पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको ऐतिहासिक अभिनन्दन समारोह एवं अन्तर्राष्ट्रिय साधना शिविर अभूतपूर्व रूपमा सफल होस् भनी शुभकामना व्यक्त गर्दछौं ।**

**नवीन काष्ठ उद्योग**

**NAWIN KASTHA UDYOG**

तालिछखेल-१५, महालक्ष्मीस्थान
ललितपुर, पो.ब.नं. ८९७५, ईपिसी २२४४
फोन नं. ९८५१०९८८५२

यहाँ विभिन्न जातका काठहरु पाउनुका साथै अर्डर बमोजिम फर्निचरहरु पनि तयार गरिन्छ ।

पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको ऐतिहासिक अभिनन्दन समारोह एवं अन्तर्राष्ट्रिय साधना शिविरको अभूतपूर्व सफलताका लागि परमपूज्य सद्गुरुदेवहरुको चरणकमलमा सभक्ति प्रार्थना गर्दछौं ।

**दिलिप कुमार गुप्ता**

**मिना गुप्ता**

# नाथ सम्प्रदायमा- पन्थ

नाथ सम्प्रदायमा विकाससँगै सारा व्यक्तिहरुलाई यसले प्रभाव पारेको पाइन्छ । यस सम्प्रदायभित्रको विराटताले सम्पूर्ण पक्षहरुलाई सेमेटी समाजसमक्ष उजागर गरेको पाइन्छ । नाथ सम्प्रदायका बारेमा नाथपंथी साहित्यहरुमा उच्चताका साथ विभिन्न पक्षहरुलाई उजागर गरिएको छ । विभिन्न ग्रन्थहरुका माध्यमबाट नाथ पंथको इतिहास, दर्शन, धर्म, कर्मकाण्ड, सिद्धान्तका बारेमा विस्तृत जानकारी प्राप्त गर्न सकिन्छ । यसरी नाथपंथी इतिहास, दर्शन, धर्म, कर्म, आदि दुर्लभ ग्रन्थहरुको विकास हुँदै जनमानसमा प्रभाव बढ्दो थियो भने अर्कोतर्फ यस सम्प्रदायभित्र विभिन्न शाखा एवं उपशाखाहरुको पनि विकास भएको पाइन्छ ।

शास्त्रहरुमा भगवान् शिवद्वारा सर्वप्रथम १८ सम्प्रदायको प्रतिपादन गरी कार्यान्वयनमा ल्याइएको उल्लेख पाइन्छ । तदन्तर महायोगी श्री गुरु शिव गोरक्षले बाह्र सम्प्रदायको सङ्गठन गर्नुभयो । तर समयसँगै यी सम्प्रदायहरुमा पारस्परिक रूपमा होडबाजी एवं वैमनस्यता उत्पन्न हुन पुग्यो र अन्तमा महायोगी श्री गुरु शिव गोरक्षले भगवान् शिवद्वारा प्रवर्तित छ र आफैले सङ्गठित गर्नुभएको छ सम्प्रदाय गरी जम्मा बाह्र सम्प्रदायको पुनर्गठन गर्नुभयो जुन यसप्रकार छन्-

१. सत्यनाथी
२. धर्मनाथी
३. रामपंथ
४. नाटेश्वरी
५. कन्हड्
६. कपिलानी
७. वैरागपंथ
८. माननाथी
९. आइपंथ
१०. पागलपंथ
११. धजपंथ
१२. गंगानाथी

प्रत्येक पंथसँग विभिन्न नाथ योगीहरुका नाम जोडिएको पाइन्छ । साथै देश, काल, परिस्थितिअनुसार विभिन्न क्षेत्रमा बस्ने व्यक्तिहरुको आधारमा उनीहरुले मान्ने पौराणिक देवता वा महात्मालाई आफ्नो प्रवर्तक मानी यी पन्थहरुको विकास भएको पाइन्छ । विद्वान् लेखक स्व. हजारी प्रसाद द्विवेदीले यी

प्रत्येक पंथको विशेष स्थान, यसका मूल प्रवर्तक वा देवता आदिलाई ध्यानमा राखी बाह्र पन्थको विवरण निम्नअनुसार उल्लेख गर्नुभएको पाइन्छ-

**१. सत्यनाथी**

यस पन्थका मूल प्रर्वतकका रूपमा सत्यनाथलाई मानिन्छ । सत्यानाथलाई नवनाथको रूपमा लिइन्छ । सत्यनाथलाई जलस्वरूप ब्रह्मको रूपमा मानी श्रद्धा, भक्ति दिइन्छ । यस पन्थका सत्यनाथ ब्रह्मालाई योगीरूपमा मानिन्छ । यस पन्थको विकास उडीसा प्रदेशअर्न्तगत पाताल भुवनेश्वरमा भएको उल्लेख गरेको पाइन्छ ।

**२. धर्मनाथ**

यस पन्थको विकास नेपालबाट भएको उल्लेख गरेको पाइन्छ भने यसका मूल प्रवर्तकको रूपमा धर्मराज (युधिष्ठिर) लाई मानेको पाइन्छ ।

**३. राम पंथ**

यस पन्थको प्रवर्तकको रूपमा श्री रामचन्द्रलाई मानिएको छ । त्यति बेलाका मानिसहरु यस पन्थको विकास गोरखपुरबाट विकसित भएको मान्दछन् । गोरखपुर अन्तर्गतको चौकतप्त पंचौरा यस पन्थको उद्गमस्थल मानिन्छ ।

**४. नाटेश्वरी**

यस पन्थको विकास गोरख झेलम टिल्ला पञ्जाबबाट भएको मानिन्छ । यस पन्थको प्रवर्तक लक्ष्मणलाई मानिन्छ । यस पन्थअर्न्तगत अन्य दुई शाखा नाटेश्वरी र दरियापन्थीलाई मानिन्छ ।

**५. कन्हड्**

यस पन्थको प्रवर्तकका रूपमा गणेशलाई मानिन्छ । यस पन्थको विकास मानफराकच्छबाट भएको मानिन्छ । यस पन्थ कुन क्षेत्रबाट कसरी विकास भयो त्यस सम्बन्धमा स्पष्ट उल्लेख पाइँदैन ।

**६. कपिलानी**

यस पन्थका प्रवर्तक कपिल मुनिलाई मानिन्छ । यसको विकास बङ्गालबाट भएको पाइन्छ । यस पन्थको उद्गमस्थलको रूपमा गङ्गा सागरलाई मानिन्छ । साथै यस समय कलकत्ते दमदमको नजिक गोरख वंशीलाई यसको स्थान पनि मानेको पाइन्छ ।

**७. वैराग्य पंथ**

यस पंथका प्रवर्तकका रूपमा भर्तृहरिलाई मानिन्छ । यस पन्थको विकासको उद्गमस्थको रूपमा रतढोडा पुस्करको नजिक अजमेर मानिन्छ ।

**८. माननाथी**

यस पन्थका प्रवर्तक गोपीचन्दलाई मानिन्छ । यस पन्थको विकास कुन स्थानबाट भयो भन्ने बारेमा केही उल्लेख पाइँदैन । तैपनि त्यस समयमा जोधपुरको महामन्दिर मठलाई यस पन्थको स्थान मानिन्छ ।

**९. आईपंथ**

यस पन्थकी प्रर्वतक भगवती निमलालाई मानिन्छ । यस पन्थको उद्गम स्थान जोगी गुफा वा गोरख कुवालाई मानिन्छ । भारतको बङ्गाल प्रदेशको दिनाजपुर जिल्लाको क्षेत्रमा यसको विकास भएको मानिन्छ ।

**१०. पागलपंथी**

यस पंथको विकास पंजावबाट भएको मानिन्छ । यस पंथको प्रवर्तकको रूपमा चौरङ्गीनाथ (पूरनभगता) लाई मानिन्छ । यस पंथको विकासको उद्मस्थल अवोहरलाई मानेको पाइन्छ ।

**११. धजपंथ**

यस पंथको विकास कहाँबाट कसरी भयो भन्ने उल्लेख नभए पनि यसका प्रवर्तकको रूपमा हुनमान्जीलाई मानेको पाइन्छ ।

**१२. गङ्गानाथी**

यस पंथको विकास गरुदासपुर पञ्जावबाट भएको पाइन्छ । यस पंथको प्रवर्तकका रूपमा भीष्म पितामहलाई मानिन्छ र यसको उद्गमस्थल जरवबारलाई मानिन्छ ।

जय गुरुदेव !

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौँ। आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ।*

# आफ्नो हात आफै हेरौं

## भाग्य रेखा

अघिल्लो अंकबाट क्रमश:

७. सप्तमावस्था : हृदयरेखाबाट निस्कने यो भाग्यरेखा सिधा शनि पर्वतसम्म पुग्छ। तर केही व्यक्तिको हत्केलामा यो रेखा अगाडि बढेर त्रिशूलजस्तो बन्छ जसको एउटा भाग सूर्य पर्वततिर र अर्को गुरु पर्वततिर जान्छ। यस्तो भाग्यरेखा अत्यन्तै शुभ मानिन्छ। यदि यस प्रकारको भाग्यरेखा अन्तमा गएर दुई भागमा बाँडिएको देखिन्छ भने त्यस्तो व्यक्तिले जीवनमा अपूर्व धन, मान, यश, पद, प्रतिष्ठा प्राप्त गर्दछ।

यस्तो व्यक्ति सहृदय हुन्छ, आफ्नो जीवनमा उसले निरन्तर अरुको सहायता गर्दछ। उसले आफ्नो प्रयत्नले लाखौँ रूपैँयाँ कमाउँछ र धार्मिक कार्यमा खर्च पनि गर्दछ। यदि यस रेखाको प्रारम्भमा द्वीपको चिह्न देखिन्छ भने व्यक्तिले जीवनमा ठूलो बदनामी झेल्नुपर्ने हुन्छ। यदि यो रेखा बीचमा टुटेको छ भने आयुको उक्त समयमा उसको विशेष रूपमा आर्थिक हानी हुन्छ। यदि यस रेखामा बाङ्गातिङ्गा रेखाहरु छन् भने त्यस व्यक्तिले जीवनमा कैयौँ पटक संघर्षको सामना गर्नुपर्ने हुन्छ र उसले अति नै कठिनाईपछि मात्रै सफलता प्राप्त गर्दछ।

यदि यस रेखाको अन्तिम स्थानमा ताराको चिह्न छ भने उसको अकाल मृत्यु हुन्छ। यदि यो रेखाले माझी औँलामा चढ्ने प्रयास गर्छ भने त्यस व्यक्तिले जीवनमा बराबर असफलताको सामना गर्दछ।

८. अष्टमावस्था : यदि यो रेखा निर्दोष, स्पष्ट र गहिरो छ भने त्यस व्यक्तिको बालककाल अति नै सुखसँग बित्छ हुन्छ। विद्याको दृष्टिबाट उसले श्रेष्ठ विद्या प्राप्त गर्दछ। यस्तो बालकको बुद्धि तेज हुन्छ र ऊ आफ्नो स्वतन्त्र विचारले गर्दा समाजमा चिनिन जान्छ। तर परिवारमा उसलाई कुनै प्रकारको पनि विशेष सहयोग प्राप्त हुँदैन। यसको बावजूद पनि ऊ प्रयत्न गरेर सफलतातिर अघि बढ्छ। यस्तो व्यक्ति सफल साहित्यकार, न्यायाधीश अथवा दार्शनिक हुन्छ। यस्तो व्यक्तिले गृहस्थ जीवनमा बारम्बार असफलताको सामना गर्दछ।

यस्तो व्यक्तिको जीवनमा कैयौँ पटक विदेश यात्राको योग हुन्छ। तर यस प्रकारको भाग्यरेखा टुटेको वा लहरादार छ भने त्यस व्यक्तको जीवनमा सफलताको अवसर कम रहन्छ। उसले जीवनमा बारम्बार संघर्ष गर्नुपर्ने हुन्छ र धेरै प्रयत्नपछि मात्रै सफलता प्राप्त हुन सक्छ। यदि यस प्रकारको भाग्य रेखा अन्तमा गएर दुई मुखी बन्न जान्छ भने यो श्रेष्ठ संकेत हो। यस्तो व्यक्ति निश्चय नै आफ्नो

उद्देश्यमा सफल हुन्छ ।

९. नवमावस्था : यस प्रकारको भाग्यरेखालाई अति नै शुभ मानिएको छ । यदि यो रेखा शनि पर्वतमा गएर दुई भागमा विभक्त वा तीन भागमा विभक्त हुन्छ भने ऊ अतुलनीय धनको स्वामी हुन्छ तथा जीवनमा पूर्ण प्राप्ति गर्दछ । यस्तो व्यक्तिको जीवनमा आयको स्रोत एकभन्दा अधिक हुन्छ । यदि यस प्रकारको भाग्यरेखाको अन्तिम भाग गुरु पर्वततिर गएको देखिन्छ भने त्यस व्यक्तिले साहित्यको माध्यमबाट श्रेष्ठ फल प्राप्त गर्दछ । यदि यस प्रकारको भाग सूर्य पर्वततिर गएको छ भने उसले विदेशमा व्यापार गरेर पूर्ण सफलता प्राप्त गर्दछ । उसले धार्मिक कार्यहरुमा खुबै भाग लिन्छ तथा समाजमा उसलाई सम्मानित स्थान प्राप्त हुन्छ । यदि यस प्रकारको रेखा टुटेको छ वा जंजीरजस्तो छ भने उसले जीवनमा धेरै नै कठिनाईहरुको सामना गर्नुपर्ने हुन्छ । यदि यो रेखा माझी औँलाको पोरमा चढेको देखिन्छ भने उसलाई जीवनमा आवश्यकताभन्दा हानी सहनु पर्ने हुन्छ ।

जसको हत्केलामा यस्तो भाग्यरेखा हुन्छ, उसको भाग्योदय विवाहपछि नै हुन्छ । उसको मन अस्थिर तथा वृत्ति चंचल हुन्छ । जीवनमा एकभन्दा धेरै स्त्रीहरु उसको सम्पर्कमा रहन्छन् । उसको जीवनमा जलयात्राको योग धेरै हुन्छ । यस्तो व्यक्ति एकान्तप्रेमी, सहृदय एवं मधुर स्वभावको हुन्छ ।

१०. दशमावस्था : जसको हत्केलामा यस प्रकारको भाग्यरेखा हुन्छ, उसले निश्चय नै उच्च पद प्राप्त गर्दछ । यस्तो व्यक्तिले जीवनमा कैयौँ पटक विदेश यात्रा गर्दछ अथवा ऊ वायुसेनामा उच्च पद प्राप्त अधिकारी हुन्छ । जीवनमा यस्तो व्यक्ति राष्ट्रस्तरीय सम्मान प्राप्त गर्दछ र उसको जीवनमा साहस तथा धैर्यको कुनै पनि कमी रहँदैन । यदि यस्तो भाग्यरेखा जंजीरदार, टुटेको वा लहरादार छ भने उसले जीवनमा बाधाहरुको अति नै सामना गर्नुपर्ने हुन्छ । यदि यस प्रकारको भाग्यरेखा अन्तमा गएर दुई भागमा बाँडिन्छ भने र त्यसको एउटा भाग गुरु पर्वत तथा अर्को भाग सूर्य पर्वततिर जान्छ भने ऊ प्रबल भाग्यशाली हुन्छ ।

११. एकादशावस्था : यस्तो भाग्य रेखा धेरै नै कम मानिसको हत्केलामा देखा पर्छ । यस्तो व्यक्तिको व्यक्तित्व भव्य हुन्छ । यस्तो व्यक्ति शुक्रजस्तै जीवनमा चम्किन्छ । यस्तो व्यक्तिको कार्यबाट समाज प्रभावित हुन्छ । देशको दिशा निर्देशमा यस्तो व्यक्तिको महत्त्वपूर्ण भूमिका हुन्छ । यस्तो व्यक्तिको विचार, कार्य सबै योजनाबद्ध हुन्छ । एउटा साधारण कुलमा जन्म लिएर पनि यस्तो व्यक्ति सबै दृष्टिबाट योग्य, सम्पन्न र सुखी हुन्छ ।

यदि यस्तो रेखा अन्तमा गएर दुई भागमा बाँडिइको देखिन्छ भने ऊ उच्च स्तरको अधिकारी हुन्छ तथा उसको जीवनमा भौतिक दृष्टिबाट कुनै प्रकारको पनि कमी रहँदैन ।

यी एघार प्रकारका भाग्य रेखाको उद्गम स्थल बाहेक पनि अन्य पनि उद्गम स्थल हुन सक्छन् । पाठकहरुले एउटा कुरा ध्यानमा राख्नु पर्दछ कि जुन रेखाले शनि पर्वतलाई स्पर्श गर्दछ, वास्तवमा त्यही रेखा भाग्य रेखा हो ।

क्रमश:

# बेसारको उपयोगिता

अचार, तरकारी वा अन्य खाद्य सामग्री बनाउँदा मसलाको रूपमा प्रयोगमा आउने बेसार अत्यन्तै उपयोगी स्वास्थ्य सामग्री पनि हो । आकर्षक रङ तथा वास्ना (Flavor) को लागि प्रयोगमा आउने बेसारले खानेकुरालाई आकर्षक र स्वादिलो मात्रै बनाउँदैन, यसले खानेकुरालाई संरक्षण पनि पुऱ्याएको हुन्छ । कुहिन र नष्ट हुनबाट बचाई यसले खानेकुराको पोषण तत्त्वलाई जोगाएर राखेको हुन्छ । खानालाई संरक्षण दिने बेसारको औषधीय उपयोगिता पनि निकै छ । वर्षौंदेखि यसको उपयोगिताको बारेमा मानिसले चासो राख्दै आएका छन् ।

ऋगचअगक्ष यिलनब नामक विरुवाको जरा नै बेसार हो । यही जरालाई सुकाई धूलो बनाई उत्पादित पहेँलो धूलोलाई खानामा मसलाको रूपमा प्रयोग गरिन्छ । यद्यपि बेसारलाई ताजा बेसार (जरा), सुकेको र पाउडर बनाएको बेसार, सबै रूपमा प्रयोगमा ल्याउन सकिन्छ । Curcuma longa को जरा (rhizome) बाट १ सयभन्दा पनि बढी रासायनिक तत्त्व निकाल्न सकिन्छ । यी तत्त्वहरुमध्ये Curcuminoids मुख्य हुन् ।

जनावरमा गरिएको अध्ययनले बेसारमा हुने यस्ता तत्त्वहरुले leukotriene उत्पादनमा अवरोध सिर्जना, cyclooxgenase तथा arachidonic acid को उत्पादनमा अवरोध ल्याउनुका साथै platelete aggregation मा पनि कमी ल्याउँदछ भन्ने कुराको पुष्टि गरेको छ । यसैगरी Curcumin तथा अन्य तत्त्वसँग anti inflammatory property तथा कलेजोमा कोषिकाहरुलाई हानिकारक toxins, hepatitis C virus आदिबाट सुरक्षित राख्ने क्षमता हुन्छ भन्ने कुरा पनि खोजले देखाएको छ ।

आयुर्वेदिक चिकित्सा/औषधिहरुमा बेसारको प्रयोग निकै भएको पाइन्छ । खाना पचाउन, रक्तसंचार प्रक्रियामा सुधार ल्याउन यसले मद्दत गर्नुका साथै दम, खोकी आदिको उपचारमा पनि बेसारलाई प्रयोगमा ल्याइएको पाइन्छ । त्यसैगरी लुटो, घाउ, खटिरा, कीराको टोकाइ आदि जस्ता छालाको समस्यामा पनि बेसारलाई प्रयोगमा ल्याइन्छ । यसका साथै महिनावारीको समस्या, दुखाइ, पखाला, Resp. tract infection आदिमा पनि बेसारको प्रयोग उपयोगी छ । विशेष गरी भारत, चीन, नेपाल तथा अन्य दक्षिणपूर्वी एसियाली देशहरुमा यसको प्रयोग बढी भएको पाइन्छ ।

## बेसारको विभिन्न गुण र यसको प्रयोग

-बेसारले पाचन प्रक्रियालाई प्रभावकारी बनाउँछ । यसका साथै वायुको समस्याबाट पनि मुक्ति दिलाउँछ । कलेजोबाट दषभि को उत्पादनलाई stimulate गर्दछ । Bile को उत्पादनमा असर पुऱ्याउने हुँदा बेसारले चिल्लो पदार्थको पाचन क्रियामा राम्रो मद्दत गर्दछ ।

-कलेजोलाई विभिन्न किसिमका रोग तथा जीवाणुबाट सुरक्षित राख्ने हुँदा कलेजोका विभिन्न अवस्था (जस्तै, hepatitis, cirrhosis तथा jaundice) मा बेसारको प्रयोग उपयुक्त हुन्छ ।

-सौन्दर्यका विभिन्न सामग्रीमा बेसारको प्रयोग गरिन्छ । बेसार र श्रीखण्ड बराबर भाग राखी पानी हाली लेदो बनाउने र राति सुत्दा लगाउने हो भने दुई हप्तामा छाला स्वस्थ भएर आउँछ । यसैगरी छालामा डण्डीफोरको निदानको लागि पनि बेसारको प्रयोग गर्न सकिन्छ ।

-बेसारको धूलोमा नीमको पातलाई मसिनो गरी भिजाउने र छालामा लगाउने हो भने घाउ खटिराको निदानमा सहयोग पुग्छ ।

-बेसारको धूलोमा नीमको पातलाई मसिनो गरी भिजाउने र छालामा बगाउने हो भने घाउ-खटिराको निदानमा सहयोग पुग्छ ।

-बेसारमा किटाणु मार्ने शक्ति हुन्छ । तसर्थ, यसलाई External antibiotic को रूपमा प्रयोग गर्न सकिन्छ । लुटो, घाउ, खटिरा वा छालामा जीवाणुको संक्रमण भएको अवस्थामा बेसारलाई लेप बनाई प्रयोग गर्ने गरिन्छ । आधा

चिया चम्चा बेसारको धूलो र अदुवाको धूलो मिसाएर पानीमा लेदो बनाउने र छालामा लगाउने गरेमा छालामा भएको घाउ खटिरा बिस्तारै निको हुँदै जान्छ । त्यस्तै, छालाको cancer तथा precancerous अवस्थामा पनि बेसार उपयोगी हुन सक्छ ।

-दुखाइ कम गर्न सक्ने क्षमता भएको कारणले गर्दा osteoarthritis तथा मांसपेशीको दुखाइमा बेसार उपयोगी छ। सुकेको अदुवा कुटेर त्यसमा बेसार मिलाएर बाक्लो लेदो बनाउने र तताएर दुखेको ठाउँमा लगाउँदा दुखाइमा राहत मिल्छ ।

-महिनावारी समस्यामा पनि बेसारको प्रयोग उपयोगी हुन्छ । बेसारसँग Antispasmodic property हुन्छ । महिनावारीमा हुने पेट दुखाइलाई यसर्थ यसले कम गर्न सक्छ ।

-पुरानो खोकी छ भने बेसारको सानो सानो टुक्रा मुखमा हालेर चुस्ने गरेमा पुरानो खोकी ठीक हुन्छ अथवा बेसारको धूलोमा मह मिसाएर चाट्ने गरेमा कफ रोकिएको पनि ठीक हुन्छ ।

-बाह्र ग्राम महमा तीन ग्राम बेसार मिलाएर चाट्ने वा करेला, प्याज, बेसार घिउमा पकाएर खाने गरे मधुमेह रोग ठीक हुन्छ ।

-दाद आएकोमा आफ्नै पिसाबले धुने वा ताजा बेसार र एक चिम्टी मह खाने गरे दाद निको हुन्छ ।

-एउटा अलि ठूलो बेसारको गाना, सुकेको बाँसको पात, २५ ग्राम जति सिधेनुन सबै कुटेर २/३ माना पानीमा हालेर पकाउने एक चौथाई जति भएपछि आधा-आधा घण्टाको फरक पारेर १ ग्रामको मात्रा गरेर खाने गरे नाकबाट रगत आउने रोग निको हुन्छ ।

-१ सय ग्राम बेसार पिनेर कपडाले छान्ने र २ ग्राम बेसारमा मह वा पिपलको दूध मिसाएर खाने गरे टि.बी. रोग बिस्तारै निको हुन्छ ।

-दश ग्राम बेसार पिनेर सर्स्यूँको तेलमा मिलाएर लगाउने र कपडाले बाँधिदिनाले टन्सिल निको हुन्छ । तर यो क्रम ३/४ पल्ट गर्नु जरुरी छ ।

-बेसार पिनेर कीराले खाएको दाँतको प्वालमा कोचिदिनाले वा बेसार, ल्वाङ, ज्वानो मिलाई पिनेको धूलो दाँतमा राख्दा कीरा मर्नुका साथै दुखाइ आराम हुन्छ ।

-साबुन र बेसारको धूलो मिसाएर मलम बनाई पिलोमा लगाए पिलो छिट्टै फुटेर निको हुन्छ ।

-काँचो बेसारलाई कागज वा सुकेको साल वा कर्कलोको पातमा पोको पारेर आगोमा पोली धूवाँ लिएमा रुघा कम हुन्छ ।

-बेसार पिनेर नीमको हाँगा घोटेर वा थिचेर मिसाई बनाएको मलम लगाउँदा पनि चर्मरोग ठीक हुन्छ ।

जय गुरुदेव !

## दिव्य गुरू महोत्सव

परमपूज्य सद्‌गुरूदेव डा. नारायण दत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) यस धर्तीमा अवतरित हुनु भएको अंग्रेजी महिनाको २१ तारीखको पावन अवसरमा सिद्धाश्रम शक्ति केन्द्रले उक्त महिनालाई दिव्य गुरू महोत्सवको रूपमा मनाउँदै आइरहेको छ। यसै क्रममा गत पौष ६ गते तदनुसार २१ डिसेम्बर, २०१० का दिन बसुन्धरा आश्रम परिसरमा उक्त कार्यक्रम सम्पन्न भयो ।

बिहान १०:१५ मा शुभारम्भ भएको कार्यक्रममा निखिल स्तवन, गोरक्ष स्तवनको सामुहिक रूपमा सस्वर पाठ, गुरु पादुका पूजन, गुरूमन्त्र जप, हवन, आवाहन भजन, आरतीको क्रमहरू सम्पन्न भएका थिए ।

कार्यक्रममा गुरु पूजन, हवन, आरतीपछि भजनकीर्तन, नृत्य, प्रवचन आदिका क्रमहरू रहेका थिए। प्रवचनको क्रममा सावरपन्थी साधक रामजी अर्यालले गुरूको भक्तिभावमा बसेर उहाँलाई नै मूल आधार मानेर सबै कार्य गर्न पायौँ भने त्यो हाम्रो परम सौभाग्य हुने बताउनु भयो । 'शिष्य बन्न सजिलो नभएको बताउनु हुँदै यसका लागि धेरै उतार चढाव पार गर्नुपर्ने छ', उहाँले भन्नुभयो । उहाँले आउँदो माघ २२ र २३ गते सम्पन्न हुन गइरहेको पूजनीय गुरूमाताको राष्ट्रिय अभिनन्दन र अन्तर्राष्ट्रिय साधना शिविर एउटा ऐतिहासिक क्षण भएको र यसलाई सम्पन्न गर्न पाउनु आश्रमको लागि ठूलो सौभाग्य र उपलब्धि भएको पनि बताउनु भयो ।

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सञ्चालन हुँदै आइरहेका मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरु गत महिना निम्नानुसार सम्पन्न भए–

केन्द्रीयरुपमा सम्पन्न– पौष ५ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००–९:०० बजे। पौष ६ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००–८:०० बजे। पौष ७ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००–९:०० बजे । पौष १ गते बिहीबार– तान्त्रोक्त वगलामुखी हवन, वगलामुखी मन्दिर, पाटन, बिहान ८:००–९:०० बजे ।

सम्पर्क कार्यालयहरुबाट सम्पन्न– पौष ७ गते बुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००–९:०० बजे। पौष १ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००–९:०० बजे। पौष ६ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००–८:०० बजे। पौष ६ गते मंगलबार– तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००–८:०० बजे।

मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी
नेपालकै पहिलो रेडियो कार्यक्रम

**गोरक्ष निखिल सन्देश**

gnsandesh@ssk.org.np

| स्थान | समय (बिहान) | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| पोखरा | सोमबार ५:०५–५:४५ | माछापुच्छ्रे FM | ९१ |
| चितवन | सोमबार ५:००–५:४० | कालिका FM | ९५.२ |
| धनगढी | सोमबार ५:३०–६:०० | दिनेश FM | ९३.८ |
| सुर्खेत | शनिबार ५:१५–५:४५ | रेडियो भेरी FM | ९८.६ |
| गोरखा | सोमबार ५:००–५:३० | रेडियो गोरखा FM | ९२.८ |
| भैरहवा | बिहीबार ५:००–५:४५ | रूपन्देही FM | १०२ |
| दाङ घोराही | बिहीबार ५:३०–६:०० | रेडियो मध्यपश्चिम FM | ९१.४ |
| पाल्पा | बिहीबार ५:००–५:३० | रेडियो मुक्तिनाथ FM | ९०.८ |
| सिन्धुली | बिहीबार ५:००–५:३० | सिन्धुलीगढी FM | १०३.६ |
| दाङ लमही | शुक्रबार ५:३०–६:०० | रेडियो देउखुरी FM | १०५.८ |
| पोखरा | बिहीबार ५:३०–६:०० | रेडियो सराङ्कोट FM | १०४.६ |
| दमौली | बिहीबार ५:२५–५:५५ | दमौली FM | ९४.२ |
| कोहलपुर | बिहीबार ५:३०–६:०० | कोहलपुर FM | १००.२ |
| चितवन | सोमबार ५:००–५:४० | त्रिवेणी FM | १००.६ |
| दमौली | बुधबार ५:०५–५:३५ | मादीसेती FM | १०५.८ |
| दमौली | बुधबार ५:१०–५:३० | रेडियो तनहूँ FM | ९७.२ |

# लुम्बिनीको लोभलाग्दो यात्रा

‘मैले त किताबमा मात्र तराईको जमिन समतल हुन्छ, त्यहाँ न त उकालो हुन्छ, न त ओरालो भनेर पढ्दाखेरि त विश्वास नै लागेको थिएन । तर आज आफ्नै आँखाले देख्दा अति रमाइलो लागिरहेको छ, साँच्ची... ।’ यसरी नै अन्य विद्यार्थीहरु पनि विभिन्न विषयवस्तुको बारेमा कुरा गरेर रमाइरहेका देखिन्थे । यो दृश्य थियो **गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम**का कक्षा १० मा अध्ययनरत विद्यार्थीहरुको लागि भनेर आयोजना गरिएको तीन दिने शैक्षिक भ्रमणको । कठ्यांग्रिँदो मंसिर २५ गतेका दिन एकाबिहानैदेखि शुरु भएको पहिलो दिनको यात्रा काठमाडौँ-पर्सा हुँदै भैरहवासम्मको थियो । कति विद्यार्थी पहिलोपटक काठमाडौँको कोलाहलबाट पर एउटा नौलो समाजमा गएर त्यहाँको रमणीय वातावरण हेर्दा केही अचम्भित र केही अनौठो अनुभव प्राप्त गरिरहेका थिए । पहिलो दिनको यात्रामा भैरहवा बजारलगायत नेपाल-भारत सीमामा पर्ने सुनौली बजारको अवलोकन गरेका थिए । दोस्रो दिनको एकाबिहानै नेपाललाई संसार सामु चिनाउने र सम्पूर्ण विश्वमा शान्तिको बिगुल फुक्ने शान्तिका अग्रदूत गौतम बुद्धको जन्मभूमि लुम्बिनीतर्फ लाग्यौँ । भैरहवाबाट करिव २५-३० कि.मी. को छोटो दुरीमा अवस्थित उक्त स्थानमा एउटा नौलो वातावरण पाएर विद्यार्थीहरु खुशी देखिन्थे । आध्यात्मिक स्कुलका विद्यार्थीहरु भएर हो कि के हो कतिले त ‘बुद्धम् शरणम् गच्छामी....’ लगायतका बुद्धका उपदेशको बारेमा राम्रै चर्चा-परिचर्चा गर्ने मौका प्राप्त गरेका थिए । लुम्बिनीका विभिन्न स्थानहरुको भ्रमण गर्ने क्रममा मायादेवी मन्दिर, विभिन्न पोखरी, अन्य राष्ट्रहरुले निर्माण गरेका स्तुपालगायत त्यहाँ अवस्थित विभिन्न सम्प्रदायको पनि अवलोकन गरिएको थियो । विशेष गरेर गौतम बुद्ध जन्मिनु भएको स्थानमा गएर त्यहाँको बारेमा विभिन्न जानकारी प्राप्त गर्न पाएकोमा यात्रा फलदायी भएको देखिन्थ्यो । उक्त दिन नै

यात्रालाई अगाडि बढाउने क्रममा बुटवल बजार हुँदै नारायणघाटसम्मको रह्यो । उक्त रात्रि त्यहीँ बजारमा बास बस्ने कार्यक्रम रह्यो । यात्राको तेस्रो दिन एकाबिहानै नारायणघाटभन्दा केही पर पहाडको टुप्पोमा अवस्थित मौलादेवी माताको दर्शन गर्न पाउँदा विद्यार्थीहरुले यात्रामा ट्रेकिङ्गको मजा उठाउन पाएका थिए । माताको दर्शनपश्चात् मुग्लिङ्ग हुँदै यात्राको अन्तिम गन्तव्यको रूपमा गोरखा जिल्लामा अवस्थित मनकामना माताको दर्शन गर्न पाउँदा सबै उत्साहित देखिन्थे । कति जना त पहिलोपटक मनकामना माताको दर्शन गर्न पाउँदा निकै खुशी देखिन्थे । मनका विभिन्न भावलाई माताको चरणमा विसर्जन गर्दै भ्रमण टोली त्यहाँबाट काठमाडौँ फिर्ता भएको थियो ।

यस भ्रमणले विद्यार्थीहरुलाई नौलो तथा नेपालका विभिन्न विषयवस्तुहरुको जानकारी दिलाउन सफल रहेको देखिन्छ । विद्यार्थीहरुको चौतर्फी विकास गर्नको लागि यस्ता कार्यक्रमहरु आगामी दिनमा पनि हुँदै जाने जानकारी विद्याश्रमले दिएको छ ।

# Siddhashram Shakti Kendra
## An Introduction

Today the world is torn with discontent, corruption and inhumanity, and no one knows what the future of the human world will be ultimately like. The world therefore needs a power, which can fight out these evils and restore the peace, good will and co-operation throughout the globe. This power can be generated in a centre where divine energy will work to produce spiritually capable of reshaping the world by striking a nice balance between spiritual attainment and material progress.

Hindu scriptures mention about an omnipotent centre, Siddhashram, to which even gods and goddesses would be lured and for the entrance unlimited sadhanas and material progress.

There must be a similar power centre from where earth can collect power to run earth smoothly. So through Swami Satchidananda a long time ago. He created the Siddhashram, the activities wherein were guided and supervised first by saints and celestials and then by divines such as Swami Nikhilesworananda and the great Guru Gorakshya (Gorakh Nath).

In Nepal, some people engaged in spiritual quest and have started a Siddhasram with all the features and systems of the scriptural and historical Siddhashrams mentioned above. The Siddhashram Shakti Kendra (SSK), was established in Kathmandu in April 21, 1999. Since then the regular ritual activities like Pujan, Aarati, Hawan, Thursday Gurupaduka pujan, Gurupujan in 21of each month, different special hawans are carried out in each months into central Ashram and contact points of Ashram throughout Nepal (e.g- Banglamokhi hawan, Battukbhairab hawan, Mahalaxmi hawan, Shree Shiva Gorakshya hawan etc.), special ' Gorakshya Nikhil Vani ' magazine is published in each month in different spiritual topics to let people know about Gurudevas ,Ashram and Spirituality. Similarly yearly calendar, Gorakshya Nikhil Stavan , Guru aarati, and many more books related to gurudevas are published by Aashram. 'Gorakshya Nikhil Sandesh' a radio program is broadcasted in different radio stations of Nepal to expand Guru sandesh and spiritual activities. Ashrams have a chain of guru volunteer (Guru Sebak/Sebika) who gets special two days tanning in 20-21of each months where they can learn more about Gurus and different techniques to maximize their spiritual level. On the special spiritual occasions like- Shreepanchami, Shivaratri, Krishnastami, Durgapuja etc. Ashram organizes a special pujan , bhajan-kirtan and free medical camp. On the special occasion of Baisakhi purnima, Ashram offers One lakh fifteen thousand Rots (Sawalakh Rot) to Shree Shree Mahayogi Guru Gorakhnath in Gorkh temple in Gorkha. All these spiritual activities are carried regularly in the central Ashram and more than 21 contacts offices throughout the country. Most or our contacts offices have its' own building and land to conduct spiritual and Ashram's activities.

**Objectives of SSK**

Siddhashram Shakti Kendra has made three specific objectives.

- To crate an environment for the spiritual realm.
- To conduct programmes and activities for the attainment of spiritual power.
- To use the spiritual power for the welfare of the society and the world at large.
- To expand Gurudevas name and let people to get more blessing from Gurudevas.

## Organization:

The Kendra has been registered in the District Administration office of Kathmandu. It is an autonomous organization dedicated to research on spiritual power. It is neither affiliated to any national or international ashram, trust or organizations, as such nor has received any financial assistance from anywhere.

Siddhashram Shakti Kendra performs its function on the spiritual guidance of divine Siddhashram and under the spiritual guidance of Paramhamsa Swami Nikhilesworananda and Shree Shree Guru Gorakh Nath. It has till now no branch anywhere in the world. But it has already held different spiritual activities throughout the world.

## Sadhana

The Kendra runs different sadhana camps, which provides opportunities for tantra sadhana practice, which uses to be held secret and debuted to the general public people. This Kendra had held different mantra sadhanas, Yog sadhanas, Dhyan sadhanas for some years of its establishment. By the grace of Gurudeva, the Kendra is going to held special Tantrik Dhyan program in near future.

## Pran – Pratisthit Materials :

No work, no special under taking (anusthan), no research and spiritual success can achieve unless it is provided with materials and resources, which are pran- prathistit (live, powerfull) i.e. enlivened with mantras pr mystical touches of the powerful sadguru. The Ashram keeps a big variety of such 'live' materials yantra, beads, wears, asans, gomukh, gutika and portraits of gods and goddesses of great venerable gurudevas. These materials are available at the Ashram and contact points of the Ashram.

## Gorakshya Nikhil Library

The Siddhashram Shakti Kendra also has a GN Library. The library has a rich collection of rare books and manuscripts, journals and magazines and audio and videocassettes related to gurudevs and spirituality. The member of library is obtained on a certain payment for one year. A member of the library is entitled to borrow any materials of his choice.

## Gorakshya Nikhil Jyoti Divya Vidyashram (GNJDV)

Spiritual education and building up moral behavior have become the need of this era. Perceiving this fact, GN Jyoti Divya Vidyashram was established in BS 2062 under the management of SSK. In the year 2067 (2011), we are running classes from Nurseary to Ten. The students learn the different text books, According to the curriculum plus extra spiritual book to make them perfect for their life inwards. The students frequently use the computer lab, science lab, library, audio visual classes in teaching learning as well as take part in Yoga, Meditation, Pujan, Hawan etc. Many times the students of GNJDV are proved that they are not only good in study and their attitude but they are excellent in dance and outdoor sports. That's why they had won a different title and tournament in the Inter School Tournament. We believe that the end of education is not only to get the certificates, it is a process to build up the knowledge and to get the positive changes in one's behavior. It may take a very short time or a long period too.

At last the activities of the past eight years testify the fact that Siddhashram Shakti Kendra, blessed by the compassion of the sadgurudevas is active for creating an environment for the restoration and revival of the age and world of spiritualism where people work for humanity.

Jai Gurudev!

यस धर्ती सौभाग्यशाली यस प्रकार छ कि यहाँ समय समयमा विभिन्न दिव्यात्माहरुको अवतरण हुने गरेको छ। सामान्य मानिस सरह उहाँहरु धर्तीमा जन्मनुहुन्छ, हुर्कनुहुन्छ र आफ्ना दिव्य लीलाहरु रचाउँदै आफ्नो कर्मभूमि पनि यसै स्थललाई बनाउनुहुन्छ। उहाँहरुको दिव्यता र तेजस्विताले धर्ती सन्तुलित रहने गरेको छ। अन्यथा छल, झूट र पाप कर्महरुको बोझ मात्र धान्नलाई धर्तीमातालाई धेरै गाह्रो हुने थियो होला।

धर्तीलाई सन्तुलित राख्ने काम दिव्यभूमि सिद्धाश्रमबाट हुने गरेको छ। जब जब धर्तीमा असत्य, छल, कपट, झूटको वर्चस्व धेरै बढ्न थाल्दछ तब सिद्धाश्रमबाट कुनै दिव्यात्मालाई यस धर्तीमा प्रेषित गरिन्छ। राम, कृष्ण, बुद्ध, शंकराचार्य आदि यसै श्रृंखलाका कडी हुन् भने वर्तमान समयमा सिद्धाश्रमका अन्यतम् विभूति परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज यसै श्रृंखलाअन्तर्गत डा. नारायण दत्त श्रीमाली स्वरुपमा धर्तीमा अवतरित हुनुभयो। आफ्नो अवतरण कालभरि उहाँले लुप्तप्रायः स्थितिमा रहेका सम्पूर्ण प्राचीन विद्याहरु मन्त्र, तन्त्र, ध्यान, योग, रत्नविज्ञान, सूर्यविज्ञान, पारदविज्ञान, पराविज्ञान, ज्योतिष, हस्तरेखा, कुण्डलिनी जागरण, सम्मोहन आयुर्वेद आदिको समाजमा पुनर्स्थापना गर्ने महानतम् कार्य गर्नुभयो। यी विधाहरु हराइसकेका, कतिपय संस्कृतको क्लिष्टताको कारण जनसाधारणको पहुँचभन्दा टाढा रहेका र कतिपय गलत रुपमा प्रस्तुत भइरहेको अवस्था थियो।

पूज्यपाद गुरुदेव डा. नारायण दत्त श्रीमालीले ती सबै विद्याहरुको, तिनको वास्तविक स्वरुपमा, सरल, सहज र सटिक रुपमा र युगअनुरुप वैज्ञानिक ढंगबाट व्याख्या गरिदिनु भयो र जनसाधारणको हातमा पूर्वज ऋषिमुनिहरुका अमूल्य यी थातीहरु थम्याइदिनु भयो। उहाँले पुस्तक लेखनको कार्यबाट, प्रवचनको माध्यमबाट, व्यक्तिगत भेटघाटको माध्यमबाट र साधना शिविरहरुको माध्यमबाट ती मानव कल्याणकारी विद्याहरुलाई जन जनको लागि सुलभ बनाइदिनु भयो। परिणामतः आज फेरि यस धर्तीमा सम्पूर्ण प्राचीन विद्याहरुप्रति मानिसहरुको रुचि बढिरहेको छ। अत्यन्त प्रतिकूल स्थितिमा, अनेकौं विरोध, आलोचना, लांछना र उपहासको विष पिउँदै गुरुदेवले समाज कल्याणको लागि यस पावन कार्य गर्नुभएको छ र यसको लागि मानव समुदाय उहाँप्रति सदा ऋणी रहनेछ।

गुरुदेवको यस समयको अवतरण गृहस्थ स्वरुपमा थियो। पूजनीय गुरुमाता भगवती देवी श्रीमालीले उहाँको धर्मपत्नी बन्ने सौभाग्य प्राप्त गर्नुभयो। जब दिव्यात्माको अवतरण हुन्छ उहाँको शक्ति पनि सँगसँगै अवतरित हुनुहुन्छ। जस्तो भगवान् श्रीरामको अवतरण हुँदा माता सीता पनि अवतरित हुनुभयो। यसरी नै शक्तिस्वरुपिणी जगत्जननीको गुरुमाताको स्वरुपमा अवतरण भएको छ।

सादा जीवन रुचाउने, आफूलाई सधैं एक साधारण नारीको रुपमा प्रस्तुत गर्ने गुरुमातालाई उहाँको बाहिरी आवरण देखेर चिन्न धेरै गाह्रो छ। उहाँलाई उहाँको वास्तविक स्वरुपमा चिन्नलाई ध्यान, साधनाको मार्गबाट मात्र सम्भव छ। सम्पूर्ण शिष्यहरुलाई पलपल कृपा वर्षाइरहने, सारा शिष्यहरुको आध्यात्मिक उत्थानको लागि चिन्तनशील रहने गुरुमाता सम्पूर्ण शिष्यहरुकी अभिभावक हुनुहुन्छ।

पूजनीय गुरुमाताको निकट भविष्यमा हुन लागिरहेको नेपाल आगमन हाल सम्पूर्ण शिष्य शिष्याहरुको अत्यन्त हर्ष, उल्लास र कौतुहलको विषय बनेको छ जसको जयकार दिनदिनै भइरहेछ, जसको फोटोको पूजा भइरहेछ, जसलाई प्रत्येक प्रार्थनामा हृदयमा विराजमान गराइन्छ उहाँ नै स्वयं साक्षात् हाम्रो अगाडि आउनु, उहाँको प्रत्यक्ष दर्शन पाउनु सबै शिष्यहरुको परम सौभाग्य भरहेको छ।

प्रायः कतै नहिंड्ने माताको यसरी नेपाल आगमन हुनु र यसपटक नितान्त पहिलोपटक उहाँ स्वयंले गुरु दीक्षा दिन्छु भन्ने कुरा सम्पूर्ण साधक साधिकाहरुको लागि आश्चर्य र हर्षको विषय बनिरहेको छ। यो सबै सम्पूर्ण भावभक्ति र गुरुदेवहरुप्रतिको अथाह प्रेमको कारण नै भइरहेको छ।

यस्तो ऐतिहासिक कार्यक्रम सम्पन्न हुन गइरहेकोमा काठमाडौं नगरी नै उल्लासमय भइरहेको छ र सम्पूर्ण साधक साधिकाले माताजी र कनिष्ट गुरुपुत्र अरविन्द श्रीमाली गुरुदेवको नेपाल आगमन हुने घडीको पल-पल प्रतीक्षा गरिरहेका छन्। अस्तु।

१-७: गत डिसेम्बर २१ मा काठमाडौंको बसुन्धरामा सम्पन्न दिव्य गुरु महोत्सव। ८-१५: गत पौष महिनामा राजधानीका विभिन्न मन्दिरहरुमा सम्पन्न नियमित मासिक हवन कार्यक्रमहरु।

गो. हु. का. द. नं. ६२/०६७/६८
का. जि. द. नं. ७०/०५६
जय गुरुदेव !
समस्त शिष्यहरूको प्रार्थनालाई
स्वीकार गरी राष्ट्रिय अभिनन्दन तथा
अन्तर्राष्ट्रिय साधना शिविरमा पदार्पण
गर्नु भएकोमा पूजनीय गुरुमाता तथा
अरविन्द गुरुदेवप्रति सभक्ति कृतज्ञता
अर्पण गर्दछौं ।
पूजनीय गुरुमाताको राष्ट्रिय अभिनन्दन
एवं
अन्तर्राष्ट्रिय साधना शिविर
२०६७ (2011)
सफल पार्न सहयोग गर्नुहुने सम्पूर्ण महानुभावहरूप्रति
हार्दिक कृतज्ञता व्यक्त गर्दै सधन्यवाद ज्ञापन गर्दछौं ।
- सिद्धाश्रम शक्ति केन्द्र नेपाल